**॥ श्री गणेशाय नमः ॥**

**ॐ**

**श्री परमात्मने नमः**

# ॥ अथ पराशरस्मृतिः ॥

## ॥ प्रथमोऽध्यायः ॥
## (पहिलो अध्याय)
## ॥ धर्मोपदेशः तल्लक्षणं च ॥
## (धर्मका उपदेश र त्यसका लक्षण)

**अथातो हिमशैलाग्रे देवदारुवनालये ।**
**व्यासमेगाग्रमासीनमपृच्छन्नृषयः पुरा ॥१॥**

धेरै अघि हिमालयको शिखरमा देवदारु रुखले ढाकिएको वनमा रहेको आश्रममा एकाग्रचित्त गरी बसेका व्यासलाई ऋषिहरूले सोधे ।

**मानुषाणां हितं धर्मं वर्त्तमाने कलौ युगे ।**
**शौचाचारं यथावच्च वद सत्यवतीसुत ! ॥२॥**

“हे सत्यवतीका पुत्र ! वर्तमान कलियुगमा मनुष्यका लागि लाभदायक धर्म, शौच र आचरणका विषयमा यथार्थ उपदेश दिनु होस् ।”

**तच्छ्रुत्वा ऋषिवाक्यन्तु समिद्धाग्न्यर्कसन्निभः ।**
**प्रत्युवाच महातेजाः श्रुतिस्मृतिविशारदः ॥३॥**

ऋषिहरूका कुरा सुनी बलिरहेको आगो एवं सूर्य जस्ता तेजिला तथा श्रुतिस्मृतिका ज्ञाता व्यासजीले भन्नु भयो ।

**न चाहं सर्व्वतत्त्वज्ञः कथं धर्मं वदाम्यहम् ।**
**अस्मत्पितैव प्रष्टव्य इति व्यासः सुतोऽवदत् ॥४॥**

म सबै तत्व जान्ने कहाँ छु र, हजुरहरूलाई धर्मको उपदेश दिन ? यसका लागि मेरा पितालाई सोधियोस् ।

ततस्ते ऋषयः सर्व्वे धर्मतत्त्वार्थकाङ्क्षिणः ।
ऋषिं व्यासं पुरस्कृत्य गता वदरिकाश्रमे ॥५॥
नानावृक्षसमाकीर्णं फलपुष्पोपशोभितम् ।
नदीप्रस्रवणोपेतं पुण्यतीर्थैरलङ्कृतम् ॥६॥
मृगपक्षिनिनादञ्च देवतायतनावृतम् ।
यक्षगन्धर्व्वसिद्धैश्च नृत्यगीतैरलङ्कृतम् ॥७॥

त्यसपछि धर्मको तत्व जान्न चाहने भएका ती सबै ऋषिगण व्यासलाई अघि लगाएर अनेक थरी रुख र लहराले भरिपूर्ण, फलफूलले अलङ्कृत, नदीका झरनाले झङ्कृत, पवित्र तीर्थले सुशोभित, पशुपंक्षीका आवासले समृद्ध, देवालयले घेरिएको तथा यक्ष, गन्धर्व र किन्नरका नाचगानले गुञ्जायमान हुने वदरिकाश्रमतिर लागे ।

तस्मिन्नृषिसभामध्ये शक्तिपुत्रं पराशरम् ।
सुखासीनं महात्मानं मुनिमुख्यगणावृतम् ॥८॥
कृताञ्जलिपुटो भूत्वा व्यासस्तु ऋषिभिः सह ।
प्रदक्षिणाभिवादैश्च स्तुतिभिः समपूजयन् ॥९॥

त्यहाँ, ऋषिहरूका सभाको बीचमा आरामसँग बसेका, मुख्य मुख्य मुनिहरूले घेरिएका, शक्तिका पुत्र, महात्मा पराशरलाई ऋषिसँगै व्यासले परिक्रमा गरी नमस्कार, स्तुति एवं पूजा गरे ।

अथ सन्तुष्टमनसा पराशरमहामुनिः ।
आह सुस्वागतं ब्रूहीत्यासीनो मुनिपुङ्गवः ॥१०॥

त्यसपछि सन्तुष्ट भएका मुनिहरूमा श्रेष्ठ पराशरले आरामसँग बसी व्यासलाई भन्नुभयो–"तिमीलाई स्वागत छ, के कामले आयौ भन ।

व्यास सुस्वागतं ये च ऋषयश्च समन्ततः ।
कुशलं कुशलेत्युक्त्वा व्यासः पृच्छत्यतः परम् ॥११॥
यदि जानासि मे भक्तिं स्नेहाद्वा भक्तवत्सल ! ।
धर्मं कथय मे तात ! अनुग्राह्योह्यहं तव ॥१२॥

व्यास तिमीलाई स्वागत छ । अनि तिमीलाई घेरेर बसेका सबै ऋषिहरूलाई पनि स्वागत छ । तिमीलाई सबै थोक ठिकठाक छ नि ?", परासरले यति भनेपछि "मलाई सञ्चै छ" भन्दै व्यासले प्रश्न गरे-"हे पिता ! यदि हजुर मेरो भक्तिका बारेमा जान्नु हुन्छ वा मलाई माया गर्नु हुन्छ भने धर्मको उपदेश दिनु होस् । म हजुरको कृपापात्र हुँ ।

**श्रुता मे मानवा धर्म्मा वासिष्ठाः काश्यपास्तथा ।**
**गार्गेया गौतमाश्चैव तथा चौशनसाः स्मृताः ॥१३॥**

मनुले बताएका, वसिष्ठ र कश्यपले बताएका, गर्ग अनि गौतमले बताएका अनि उशना ऋषिले बताएका,... ।

**अत्रेर्विष्णोश्च सांवर्त्ता दाक्षा आङ्गिरसास्तथा ।**
**शातातपाश्च हारीता याज्ञवल्क्यकृताश्च ये ॥१४॥**

...अत्रिका, विष्णुका, संवर्तका, दक्षले बताएका, आङ्गिरसका, शातातपका, हारितका र याज्ञवल्क्यले बताएका पनि,... ।

**कात्यायनकृताश्चैव प्राचेतसकृताश्च ये ।**
**आपस्तम्बकृता धर्म्माः शङ्खस्य लिखितस्य च ॥१५॥**

कात्यायनका, प्रचेताले बताएका, आपस्तम्बले बनाएका र शङ्खले लेखेका पनि सबै धर्मका उपदेश.. ।

**श्रुता ह्येते भवत्प्रोक्ताः श्रौतार्थास्ते न विस्मृताः ।**
**अस्मिन्मन्वन्तरे धर्म्माः कृतत्रेतादिके युगे ॥१६॥**

जो हजुरले बताउनु भयो र मैले सुनेको छु ती मैले बिर्सेको छैन । यो मन्वन्तरमा जेजस्ता धर्म थिए अनि सत्य त्रेता आदि युगमा जेजस्ता धर्म थिए.. .।

**सर्व्वे धर्म्माः कृते जाताः सर्वे नष्टाः कलौ युगे ।**
**चातुर्वर्ण्यसमाचारं किञ्चित् साधारणं वद ॥१७॥**

ती सबै सत्ययुगमा उत्पन्न भएका थिए र सबैका सबै कलियुगमा नष्ट भए । चारै वर्णका सामान्य धर्मका बारेमा बताइ दिनु होस् ।

**चतुर्णामपि वर्णाणां कर्तव्यं धर्मकोविदैः ।**
**ब्रूहि धर्मस्वरूपञ्च सूक्ष्मं स्थूलं च विस्तरात्॥१८॥**

चारै वर्णका धर्म जो ज्ञानीबाट गर्न योग्य छन्, धर्मको स्वरूप जान्ने भएका हजुर त्यो धर्मको सूक्ष्म र स्थूल रूपलाई विस्तारपूर्वक उपदेश दिनु होस्" ।

**व्यासवाक्यावसाने तु मुनिमुख्यः पराशरः ।**
**धर्मस्य निर्णयं प्राह सूक्ष्मं स्थूलञ्च विस्तरात्॥**
**श्रृणु पुत्र ! प्रवक्ष्येऽहं श्रृण्वन्तु ऋषस्तथा ॥१९॥**

व्यासका कुरा सकिएपछि मुनिहरुका पनि मुनि पराशरले धर्मका सूक्ष्म र स्थूल निर्णयलाई विस्तारपूर्वक बताउने मनशायले भन्नु भयो "हे पुत्र ! सुन, अरु सबै उपस्थित ऋषिहरु पनि सुन्नु होस्, म बताउँदछु" ।

**कल्पे कल्पे क्षयोत्पत्तौ ब्रह्मविष्णुमहेश्वराः ।**
**श्रुतिः स्मृतिः सदाचारः निर्णेतव्याश्च सर्वदा ॥२०॥**

प्रत्येक कल्पको अन्त र शुरु (हुनु) मा ब्रह्मा, विष्णु र शिव (नै कारण हुन्) । श्रुति र स्मृति सदा सदाचारको निर्णय गर्न योग्य छन् ।

**न कश्चिद्वेदकर्ता च वेदस्मर्त्ता चतुर्मुखः ।**
**तथैव धर्मं स्मरति मनुः कल्पान्तरान्तरे ॥२१॥**

वेदका कर्ता (वा लेखक वा स्रष्टा) कोही पनि छैन । चार मुख भएका ब्रह्मा (पनि) वेदलाई स्मरण गर्ने (मात्र) हुन् । त्यसैगरी मनु पनि हरेक कल्पमा धर्मलाई स्मरण (मात्र) गर्दछन् (लेख्ने होइनन्) ।

**अन्ये कृयुगे धर्मास्त्रेतायां द्वापरे युगे ।**
**अन्ये कलियुगे नृणां युगरूपानुसारत ॥२२॥**

युग अनुसार नै मानिस आदिको शक्तिमा थपघट हुने गर्दछ । यसैले सत्ययुगमा एक किसिमको धर्म थियो, त्रेतामा अर्कै किसिमको र द्वापरमा अर्कै किसिमको धर्म थियो । यो

कलियुगमा ऋषिहरूले मानिसका लागि तिनको शक्ति अनुसार नै अर्कै किसिमको धर्म वर्णन गरेका छन् ।

**तपः परं कृतयुगे त्रेतायां ज्ञानमुच्यते ।**
**द्वापरे यज्ञ मित्यूचुर्दानमेकं कलौ युगे ॥२३॥**

सत्ययुगमा तपस्या, त्रेतामा ज्ञान, द्वापरमा यज्ञ र कलियुगमा दान प्रमुख कुरा भएको बताइन्छ ।

**कृते तु मानवो धर्मस्त्रेतायां गौतमः स्मृतः ।**
**द्वापरे शङ्खलिखितः कलौ पाराशरः स्मृतः ॥२४॥**

सत्ययुगमा मनुले बताएको, त्रेतामा गौतमको, द्वापरमा शङ्खले लेखेको र कलियुगमा पराशरको धर्मलाई प्रमुख धर्म मानिएको छ ।

**त्यजेद्देशं कृतयुगे त्रेतायां ग्राममुत्सृजेत् ।**
**द्वापरे कुलमेकन्तु कर्त्तारञ्च कलौ युगे ॥२५॥**

पापकर्म गरिन्छ कतै भने सत्ययुगमा त्यो देशलाई, त्रेतामा त्यो गाउँलाई, द्वापरमा त्यो कुललाई र कलिमा गर्ने व्यक्तिलाई छोड्नू (परित्याग गर्नू) ।

**कृते सम्भाषणात् पापं त्रेतायाञ्चैव दर्शनात् ।**
**द्वापरे चान्नमादाय कलौ पतति कर्मणा ॥२६॥**

सत्ययुगमा पापीसँग बोल्नाले, त्रेतायुगमा पापीलाई देख्नाले, द्वापरयुगमा पापीको अन्न खानाले र कलियुगमा आफैँले गर्ने (पाप) कर्मले मानिस पतित हुन्छ ।

**कृते तु तत्क्षणाच्छापस्त्रेतायां दशभिर्दिनैः ।**
**द्वापरे मासमात्रेण कलौ संवत्सरेण तु ॥२७॥**

सत्ययुगमा तत्काल, त्रेतामा दश दिनमा, द्वापरमा महिनाभरीमा र कलियुगमा एक वर्षमा श्राप लाग्दछ ।

**अभिगम्य कृते दानं त्रेतास्वाहूय दीयते ।**

**द्वापरे याचमानाय सेवया दीयते कलौ ॥२८॥**

सत्ययुगमा समिपमा गएर, त्रेतामा बोलाएर, द्वापरमा माग्नेलाई र कलियुगमा सेवा गर्नेलाई दान दिइन्छ ।

**अभिगम्योत्तमं दानमाहूतश्चैव मध्यमम् ।**
**अधमं याच्यमानं स्यात् सेवादानञ्च निष्फलम् ॥२९॥**

समिपमा गएर दिइएको दान उत्तम, बोलाएर दिइएको दान मध्यम, माग्दा दिइएको दान अधम र सेवा गर्नेलाई दिइएको दान निष्फल हुन्छ ।

**कृते चास्थिगताः प्राणास्त्रेतायां मांससंस्थिताः ।**
**द्वापरे रुधिरं यावत् कलावन्नादिषु स्थिताः ॥३०॥**

सत्ययुगमा हाडमा, त्रेतामा मासुमा, द्वापरमा रगतमा र
कलियुगमा अन्न आदिमा प्राण रहन्छ ।

**धर्मो जितो ह्यधर्मेण जितः सत्योऽनृतेन च ।**
**जिता भृत्यैस्तु राजानः स्त्रीभिश्च पुरुषा जिताः ॥३१॥**

कलियुगमा अधर्मले धर्मलाई, असत्यले सत्यलाई, सेवकले राजालाई र स्त्रीले पुरुषलाई जितेका हुन्छन् ।

**सीदन्ति चाग्निहोत्राणि गुरुपूजा प्रणश्यति ।**
**कुमार्य्यश्च प्रसूयन्ते तस्मिन् कलियुगे सदा ॥३२॥**

त्यो कलियुगमा अग्निहोत्रीहरु घट्दछन्, मान्यजनको पूजा गर्ने
कुराको नाश हुन्छ तथा कुमारीहरु बच्चा जन्माउँदछन् ।

**युगे युगे च ये धर्मास्तत्र तत्र च ये द्विजाः ।**
**तेषां निन्दां न कर्त्तव्या युगरूपा हि ते द्विजाः ॥३३॥**

युगैपिच्छेका धर्म र द्विजलाई निन्दा गर्नु हुँदैन किनकि ती आफ्नो युग अनुरुप नै हुन्छन् ।

**युगे युगे च सामर्थ्यं शेषं मुनिविभाषितम् ।**
**पराशरेण चाप्युक्तं प्रायश्चित्तं प्रधीयते ॥३४॥**

युगयुगमा बाँकी रहने सामर्थ, अरु मुनिले वर्णन गरेका कुरा तथा
पराशरले भनेका वचन अनुसार प्रायश्चित गरिन्छ ।

**अहमद्यैव तद्धर्ममनुस्मृत्य ब्रवीमि वः ।**
**चातुर्वर्ण्यसमाचारं श्रृणुध्वं मुनिपुङ्गवाः ॥३५॥**

हे मुनिजन ! म उनै मनुले बताएका चार वर्णका सदाचार आदि सम्झँदै हजुरहरूलाई
बताउँदछु, सुन्नु होस् ।

**पाराशरमतं पुण्यं पवित्रं पापनाशनम् ।**
**चिन्तितं ब्राह्मणार्थाय धर्मसंस्थापनाय च ॥३६॥**

पराशरको बिचार पुण्यदायी एवं पवित्र छ, पापनाशक छ । यो ब्राह्मणको हीतका
लागि र धर्मको स्थापनाका लागि समर्पित छ ।

**चतुर्णामपि वर्णानामाचारो धर्मपालकः ।**
**आचारभ्रष्टदेहानां भवेद्धर्मः पराङ्मुखः ॥३७॥**

चारै वर्णका लागि सदाचार नै धर्मको पालनकर्ता हो । धर्म पनि आचारभ्रष्ट शरीर देखेपछि
मुण्टो बटार्दछ ।

**षट्कर्माभिरतो नित्यं देवतातिथिपूजकः ।**
**हुतशेषन्तु भुञ्जानो ब्राह्मणो नावसीदति ॥३८॥**

दिनहुँ छ वटा कर्ममा लागिरहने, देवता र अतिथिलाई पूजा गर्ने तथा
यज्ञ गरी बचेको खाने ब्राह्मण कहिल्यै अधोगति तिर जाँदैन ।

**सन्ध्यास्नानं जपो होमो देवतानां च पूजनम् ।**
**वैश्वदेवातिथेयञ्च षट्कर्म्माणि दिने दिने ॥३९॥**

दुबै सन्ध्यामा स्नान, जप, होम, देवताको पूजा, अतिथि सत्कार र वैश्वदेव यज्ञ यी प्रतिदिनका छ कर्म हुन् ।

**प्रियो वा यदि वा द्वेष्यो मूर्खः पण्डित एव वा ।**
**वैश्वदेवे तु संप्राप्तः सोऽतिथिः स्वर्गसङ्क्रमः ॥४०॥**

चाहे प्यारो होस वा शत्रु, चाहे मूर्ख होस् वा पण्डित, वैश्वदेवमा आएको अतिथि स्वर्गको लागि पुल समान हुन्छ ।

**दूरादध्वानं पथि श्रान्तं वैश्वदेव उपस्थितम् ।**
**अतिथिं तं विजानीयान्नातिथिः पूर्वमागतः ॥४१॥**

लामो यात्रा गरेर आएका र बाटोमा थकित भएका वैश्वदेवमा आइ पुग्ने ती मानिसलाई नै अतिथि सम्झनू, पहिले देखि आएको व्यक्ति अतिथि हुँदैन ।

**न पृच्छेद् गोत्रचरणं न स्वाध्यायव्रतानि च ।**
**हृदयं कल्पयेत्तस्मिन् सर्वदेवमयो हि सः ॥४२॥**

उसको गोत्र र प्रवर नसोध्नू, स्वाध्याय र व्रत पनि नसोध्नू ।
उसैमा मन समर्पण गर्नू किनकि उ सर्वदेव स्वरुप हो ।

**नैकग्रामीणमतिथिं संगृह्णीत कदाचन ।**
**अनित्यं ह्यागतो यस्मात्तस्मादतिथिरुच्यते ॥४३॥**

एउटै गाऊँमा सधैं बस्नेलाई कहिल्यै अतिथि स्वीकार नगर्नू किनकि दिनहुँ जो आउँदैन उसैलाई नै त अतिथि भनिन्छ ।

**अतिथिं तत्र संप्राप्तं पूजयेत् स्वागतादिना ।**
**तथासनप्रदानेन पादप्रक्षालनेन च ॥४४॥**

आएका अतिथिलाई स्वागतादि गरी आसन दिएर तथा पाउ धोएर पूजा गर्नू ।

**श्रद्धया चान्नदानेन प्रियश्चोत्तरेण च ।**
**गच्छतश्चानुयानेन प्रीतिमुत्पादयेद् गृही ॥४५॥**

श्रद्धाले अन्न दिएर, मीठो वचनले तथा जाँदा परसम्म पुऱ्याएर गृहस्थीले उसलाई प्रसन्न पार्नू ।

**अतिथिर्यस्य भग्नाशो गृहात् प्रतिनिवर्तते ।**
**पितरस्तस्य नाश्नन्ति दश वर्षाणि पञ्च च ॥४६॥**

जसका घरबाट अतिथि निराश भई फर्कन्छन् त्यसको अन्न पितृहरु
पन्ध्र वर्षसम्म ग्रहण गर्दैनन् ।

**काष्ठभारसहस्रेण घृतकुम्भशतेन च ।**
**अतिथिर्यस्य भग्नाशस्तस्य होमो निरर्थकः ॥४७॥**

जसका घरबाट अतिथि निराश भई फर्कन्छन् त्यसले गर्ने एक हजार
भारी दाउरा र सय भाँडा घिउको होम पनि निरर्थक हुन्छ ।

**सुक्षेत्रे वापयेद् बीजं सुपात्रे निक्षिपेद् धनम् ।**
**सुक्षेत्रे च सुपात्रे च ह्युप्तं दत्तं न नश्यति ॥४८॥**

उत्तम खेतमा बीऊ रोप्नू र सुपात्रलाई धन दान दिनू । उत्तम खेतमा रोपिएको
बीऊ र सुपात्रलाई दिइएको दान कहिल्यै नाश हुँदैन ।

**अपूर्वः सुव्रती विप्रो ह्यपूर्वो वातिथिस्तथा ।**
**वेदाभ्यासरतो नित्यं त्रयोऽपूर्वा दिने दिने ॥४९॥**

उत्तम व्रती ब्राह्मण, अतिथि र नित्य वेदाभ्यास गर्ने ब्राह्मण अपूर्व
हुन्छन् तथा यी तीनै थरी प्रतिदिन अपूर्व भइ नै रहन्छन् ।

**वैश्वदेवे तु संप्राप्ते भिक्षुके गृहमागते ।**
**उद्धृत्य वैश्वदेवार्थं भिक्षां दत्त्वा विसर्जयेत् ॥५०॥**

वैश्वदेवका समयमा भिक्षुक घरमा आए वैश्वदेवका लागि
अन्न छुट्ट्याएर उसलाई भिक्षा दिई बिदा गर्नू ।

**यती च ब्रह्मचारी च पक्वान्नस्वामिनावुभौ ।**
**तयोरन्नमदत्त्वा च भुक्त्वा चान्द्रायणञ्चरेत् ॥५१॥**

सन्यासी र ब्रह्मचारी दुवै पाकेका अन्नका अधिकारी हुन् । यिनलाई नदिई खाए चान्द्रायण व्रत गर्नू ।

**यतिहस्ते जलं दद्याद्भैक्षं दद्यात् पुनर्जलम् ।**
**तद्भैक्षं मेरुणा तुल्यं तज्जलं सागरोपमम् ॥५२॥**

सन्यासीका हातमा पहिले जल दिनू, फेरी भिक्षा दिनू र जल दिनू । यस्तो भिक्षा मेरु पर्वत समान र जल सागर समान हुन्छ ।

**वैश्वदेवकृतान् दोषान् शक्तो भिक्षुर्व्यपोहितुम् ।**
**नहि भिक्षुकृतान् दोषान् वैश्वदेवो व्यपोहति ॥५३॥**

वैश्वदेव नगरेर उत्पन्न हुने दोष भगाउन भिक्षु समर्थ हुन्छन् तर भिक्षुकलाई भिक्षा नदिएर हुने दोष भगाउन वैश्वदेव समर्थ हुँदैनन् ।

**न गृह्णाति तु यो विप्रो ह्यतिथिं वेदपारगम् ।**
**अददन्नमात्रन्तु भुक्त्वा भुङ्क्ते तु किल्बिषम् ॥५४॥**

जो ब्राह्मण वेदमा पारङ्गत अतिथिलाई ग्रहण गर्दैन तथा अतिथिलाई नदिई अन्न स्वयं खान्छ त्यसले मानौ पाप नै खान्छ ।

**ब्राह्मणस्य मुखं क्षेत्रं निरुपममकण्टकम् ।**
**वापयेत् सर्व्ववीजानि सा कृषिः सर्वकामिका ॥५५॥**

ब्राह्मणको मुख काँडा नभएको खेत हो । त्यसैमा सबै बिऊ रोप्नू । यही नै सबै कामना पूरा गर्ने खेती हो ।

**सुक्षेत्रे वापयेद्वीजं सुपुत्रे दापयेद्धनं ।**
**सुक्षेत्रे च सुपुत्रे च यत्क्षिप्तं नैव नश्यति ॥५६॥**

बीऊ उत्तम खेतमा नै रोप्नू । धन उत्तम पुत्रलाई दिनू । उत्तम खेतमा जे रोपिन्छ र उत्तम पुत्रलाई जे  दिइन्छ त्यो कहिल्यै नष्ट हुँदैन ।

**अव्रता ह्यनधीयाना यत्र भैक्षाचरा द्विजाः ।**

**तं ग्रामं दण्डयेद्राजा चौरभक्तप्रदो हि सः ॥५७॥**

जहाँ व्रत पालना नगर्ने र वेद नपढ्ने ब्राह्मण भिक्षा माग्दछन् राजाले
त्यो गाउँलाई दण्डित गर्नू किनकि त्यो गाऊँ चोर पाल्ने गाउँ नै हो ।

**क्षत्रियो हि प्रजा रक्षन् शस्त्रपाणिः प्रचण्डवत् ।**
**विजित्य परसैन्यानि क्षितिं धर्मेण पालयेत् ॥५८॥**

क्षत्रियले शस्त्र हातमा बोक्दै साहसी भई प्रजाको रक्षा गर्दै शत्रुका
सेनालाई जितेर पृथ्वीलाई पालन गर्नू ।

**न श्रीः कुलक्रमायाता स्वरुपाल्लिखितापि वा ।**
**खड्गेनाक्रम्य भुञ्जीत वीरभोग्या वसुन्धरा ॥५९॥**

कुलक्रमले आएको र चित्रमा लेखिएको लक्ष्मी स्थिर हुन्नन् । उनलाई तरबारले प्राप्तगरी
भोगगर्नू किनकि पृथ्वी वीरहरुबाट नै भोगिन्छे ।

**पुष्पं पुष्पं विचिनुयान्मूलच्छेदं न कारयेत् ।**
**मालाकार इवोद्याने न यथाङ्गारकारकः ॥६०॥**

बगैंचामा मालीले जस्तै गरी एउटा-एउटा फूल टिप्नु कोइला बनाउनेले कोईला
टिपेझैं गरी भेट्नै समेत नचुड्नू ।

**लोहकर्म तथा रत्नं गवाञ्च प्रतिपालनम् ।**
**वाणिज्यं कृषिकर्माणि वैश्यवृत्तिरुदाहृता ॥६१॥**

फलाम तथा रत्नको काम, गाई पालन र खेती यी वैश्यका जीवन निर्वाहका
साधन बताइएको छ ।

**शूद्राणां द्विजशुश्रूषा परो धर्मः प्रकीर्त्तितः ।**
**अन्यथा कुरुते किञ्चित्तद्भवेत्तस्य निष्फलम् ॥६२॥**

द्विजको सेवालाई शूद्रको परम धर्म बताइएको छ । यसको विपरित गर्दछ
भने त्यो उसका लागि निष्फल हुन्छ ।

**लवणं मधु तैलञ्च दधि तक्रं घृतं पयः ।**
**न दुष्येच्छूद्रजातीनां कुर्य्यात् सर्वस्य विक्रयम् ॥६३॥**

नुन, मह, तेल, घिउ र दूध शूद्र जातिले छोएर दूषित हुँदैन । उसले यी सबै कुरा बेचोस् ।

**अविक्रयं मद्यमांसमभक्ष्यस्य च भक्षणम् ।**
**अगम्यागमनञ्चैव शूद्रोऽपि नरकं व्रजेत् ॥६४॥**

मदिरा एवं मासु बेचेर, खान नहुने कुरा खाएर तथा सम्भोग गर्न नहुने स्त्रीलाई सम्भोग गरेर शूद्र पनि नरकमा पर्दछ ।

**कपिलाक्षीरपानेन ब्राह्मणीगमनेन च ।**
**वेदाक्षरविचारेण शूद्रस्य नरकं ध्रुवम् ॥६५॥**

कैली गाईको दूध पिउनाले, ब्राह्मणीलाई सम्भोग गर्नाले तथा वेदका अक्षरको विचार गर्नाले शूद्रलाई निश्चय नै नरकको प्राप्ति हुन्छ ।

॥ इति श्रीपाराशरे धर्मशास्त्रे प्रथमोऽध्यायः ॥१॥
मोहनप्रसाद सापकोटाबाट श्रीपराशरस्मृतिको पहिलो अध्याय
नेपालीमा भावानुवाद गरेर सकियो ।

आदितः श्लोकानां समष्टयङ्काः-०+६५=६५
शुरुदेखिको श्लोक संख्या-०+६५=६५

## ॥ अथ द्वितीयोऽध्यायः ॥
## (दोश्रो अध्याय)

**अतः परं गृहस्थस्य धर्माचारं कलौ युगे ।**
**धर्मं साधारणं शक्त्या चातुर्वर्ण्याश्रमागतम् ॥१॥**
**संप्रवक्ष्याम्यहं भूयः पराशरवचो यथा ।**
**षट्कर्मनिरतो विप्रः कृषिकर्मापि कारयेत् ॥२॥**

यसपछि म कलियुगमा गृहस्थले गर्नुपर्ने कर्म र आचरण तथा चारै वर्णका आश्रमका साधारण

धर्मका बारेमा पराशरले बताएभैं मैले जाने अनुसार पुनः बताउने छु ।
छ वटा कर्मगर्न लागिरहने ब्राह्मणले कृषिकर्म पनि गराओस् ।

**क्षुधितं तृषितं श्रान्तं बलीवर्द्दं न योजयेत् ।**
**हीनाङ्गं व्याधितं क्लीवं वृषं विप्रो न वाहयेत् ॥३॥**

भोको, प्यासो र थकित बैललाई नजोत्नू । विकलाङ्ग, रोगी र नपुंसक बैललाई ननार्नू ।

**स्थिराङ्गं नीरुजं तृप्तं वृषभं षण्डवर्जितम् ।**
**वाहयेद्दिवसस्यार्द्धं पश्चात् स्नानं समाचरेत् ॥४॥**

बलिया अङ्ग भएको, निरोगी, सँधिएको र नपुंसकता नभएको बैललाई
आधा दिनसम्म चलाउनू र त्यसपछि नुहाउनू ।

**जपं देवार्चनं होमं स्वाध्यायं साङ्गमभ्यसेत् ।**
**एकद्वित्रिचतुर्विप्रान् भोजयेत् स्नातकान् द्विजः ॥५॥**

द्विजले जप, देवपूजा र होम गर्नू, आफ्नो वेद अङ्गसहित अभ्यास गर्नू तथा एक, दुई, तीन
वा चार स्नातक ब्राह्मणलाई भोजन गराउनू ।

**स्वयंकृष्टे तथा क्षेत्रे धान्यैश्चस्वयमर्जितैः ।**
**निर्वपेत् पञ्च यज्ञांश्चक्रतुदीक्षाञ्च कारयेत् ॥६॥**

यसरी आफैँले खेत जोतेर आफैँले उत्पन्न गरेको अन्नले
पञ्च महायज्ञ गर्नू र यज्ञको दीक्षा पनि गराउनू ।

**तिला रसा न विक्रेया विक्रेया धान्यतत्समाः ।**
**विप्रस्यैवंविधा वृत्तिस्तृणकाष्ठादिविक्रयः ॥७॥**

तिल र रस नबेच्नू । धान जस्ता वस्तु बेच्नू । घाँसपात, काठ आदि पनि बिक्री हुन सक्दछ ।
ब्राह्मणले यसरी आजीविका चलाउनू ।

**हलमष्टगवं धर्म्यं षड्गवं वृत्तिलक्षणम् ।**
**चतुर्गवं नृशंसानां द्विगवं वृषघातिनाम् ॥८॥**

आठवटा बैलको हलो धर्मको, पाँच बैलको हलो वृत्तिलक्षणको, चार बैलको हलो दयाहीनको र दुई बैलको हलो बैल मार्नेको हुन्छ ।

**द्विगवं वाहयेत् पादं मध्याह्नं तु चतुर्गवम् ।**
**षड्गवं तु त्रियामाहेऽष्टभिः पूर्णे तु वाहयेत् ॥९॥**

दुई बैलको हलो दिनको एक चौथाइसम्म, चार बैलको हलो दोपहरसम्म, पाँच बैलको हलो तीन प्रहरसम्म र आठ बैलको हलो दिनभर चलाउनू ।

**न याति नरकेष्वेवं वर्तमानस्तु वै द्विजः ।**
**दानं दद्याच्चैवेतेषां प्रशस्तं स्वर्गसाधनम् ॥१०॥**

यसरी आचरण गर्ने हो भने ब्राह्मण नरकमा जाँदैन । उसले दान पनि दिनू । यो उसका लागि स्वर्ग प्राप्त गर्ने उत्तम साधन हो ।

**ब्राह्मणस्तु कृषिं कृत्वा महादोषमवाप्नुयात् ।**
**संवत्सरेण यत्पापं मत्स्यघाती समाप्नुयात् ॥**
**अयोमुखेन काष्ठेन तदेकाहेन लाङ्गलो ॥११॥**

ब्राह्मणले त खेती गरेर महादोष प्राप्त गर्दछ । वर्षभरी माछा मार्नेलाई जेजति पापलाग्दछ त्यति नै पाप फलामको मुख भएको हलो चलाउनेलाई एक दिनमा लाग्दछ ।

**पाशको मत्स्यघाती च व्याधः शाकुनिकस्तथा ।**
**अदाता कर्षकश्चैव पञ्चैते समभागिनः ॥१२॥**

पाशो थापेर जीव समाउने, माछा मार्ने, व्याधा, चराको शिकार गर्ने र दान नगर्ने किसान-यी सबै समान पापका भागी हुन् (हुन्छन्) ।

**कण्डनी पेषणी चुल्ली उदकुम्भोऽथ मार्जनी ।**
**पञ्च सूना गृहस्थस्य अहन्यहनि वर्त्तते ॥१३॥**

ओखल, सिलौटो, चुलो, पानीको गाग्रो र कूचो-यी पाँच स्थलहरु गृहस्थका घरमा प्रतिदिन चल्ने बधस्थल हुन् ।

**वैश्वदेवो बलिर्भिक्षा गोग्रासो हन्तकारकः ।**
**गृहस्थः प्रत्यहं कुर्यात्सूनादोषैर्न लिप्यते ॥१४॥**

वैश्वदेव यज्ञ, बलिकर्म, भिक्षादान, गाईलाई गोग्रास दिने र अतिथि सत्कार दिनहुँ गर्नाले गृहस्थ यी पाँच हत्याको दोषले लिप्त हुँदैन ।

**वृक्षान् छित्त्वा महीं भित्त्वा हत्वा तु मृगकीटकान् ।**
**कर्षकः खलु यज्ञेन सर्वपापात् प्रमुच्यते ॥१५॥**

रुखविरुवा काटेर, जमिन भेदन गरेर र पशु तथा कीरा मारेर (पाप कमाएको) किसान यज्ञद्वारा निश्चय नै सबै पापबाट छुट्दछ ।

**यो न दद्याद् द्विजातिभ्यो राशिमूलमुपागतः ।**
**स चौरः स च पापिष्ठो ब्रह्मघ्नं तं विनिर्दिशेत् ॥१६॥**

जो किसान अन्नको थुप्रोमा बसेर पनि ब्राह्मणलाई दान दिँदैन त्यो चोर र पापी हो, उसलाई ब्रह्मघाती भनेर बोलाउनू ।

**राज्ञे दत्त्वा तु षड्भागं देवानाञ्चैकविंशकम् ।**
**विप्राणां त्रिंशकं भागं कृषिकर्त्ता न लिप्यते ॥१७॥**

राजालाई छैटौं, देवतालाई एक्काइसौं र ब्राह्मणलाई तीसौं भाग दिएर खेती गर्ने व्यक्ति पापमा लिप्त हुँदैन ।

**क्षत्रियोऽपि कृषिं कृत्वा द्विजान् देवांश्च पूजयेत् ।**
**वैश्यःशूद्रस्तथा कुर्यात् कृषिवाणिज्यशिल्पकान् ॥१८॥**

क्षत्रियले पनि कृषिकर्म गरेर ब्राह्मण र देवतालाई पूजा गरोस् । वैश्य र शूद्रले पनि त्यसैगरी खेती, व्यापार र शिल्पकारी गरुन् ।

**विकर्म कुर्वते शूद्रा द्विजसेवाविवर्जिताः ।**
**भवन्त्यल्पायुषस्ते वै पतन्ति नरकेषु च ॥१९॥**

द्विजको सेवा गर्न छोडेर शूद्र यदि छुट्टै काम गर्दछ भने निश्चय नै

उसको आयु कम हुन्छ र नरकमा खस्दछ ।

**चतुर्णामपि वर्णानामेष धर्मः सनातनः ॥२०॥**

चारै वर्णका यी परम्परागत धर्म हुन् ।

॥ इति श्रीपाराशरे धर्मशास्त्रे द्वितीयोऽध्यायः ॥२॥
मोहनप्रसाद सापकोटाबाट श्रीपराशरस्मृतिको दोश्रो अध्याय
नेपालीमा भावानुवाद गरेर सकियो ।

आदितः श्लोकानां समष्टयङ्काः-६५+२०=८५
शुरुदेखिको श्लोक संख्याः ६५+२०=८५

## ॥ अथ तृतीयोऽध्यायः ॥
## (तेश्रो अध्याय)
## ॥ अशौचव्यवस्थावर्णनम् ॥
## (जुठोसूतकका कुरा)

**अत शुद्धिं प्रवक्ष्यामि जनने मरणे तथा ।**
**दिनत्रयेण शुध्यन्ति ब्राह्मणाः प्रेतसूतके ॥१॥**

यसपछि म जूठो र सूतक शुद्धिका बारेमा बताउँदछु । जुठोमा ब्राह्मण तीन दिनमा शुद्ध हुन्छ ।

**क्षत्रियो द्वादशाहेन वैश्यो पञ्चदशाहकैः ।**
**शूद्रः शुध्यन्ति मासेन पराशरवचो यथा ॥२॥**

क्षत्रिय बाह्र दिनमा, वैश्य पन्ध्र दिनमा र शूद्र एक महिनामा शुद्ध
हुन्छ-यस्तो पराशरको वचन छ ।

**उपासने तुविप्राणामङ्गशुद्धिस्तु जायते ।**
**ब्राह्मणानां प्रसूतौ तु देहस्पर्शो विधीयते ॥३॥**

देवपूजाको कारण ब्राह्मणका अङ्ग शुद्ध हुन्छन् । सूतकको असुद्धिमा
पनि ब्राह्मणको शरीरको स्पर्श गर्ने विधान छ ।

**जाते विप्रो दशाहेन द्वादशाहेन भूमिपः ।**
**वैश्यः पञ्चदशाहेन शूद्रो मासेन शुध्यति ॥४॥**

सूतकमा ब्राह्मण दश दिनमा, क्षत्रिय बाह्र दिनमा, वैश्य पन्ध्र दिनमा र
शूद्र एक महिनामा शुद्ध हुन्छ ।

**एकाहाच्छुद्ध्यते विप्रो योऽग्निवेदसमन्वितः ।**
**त्र्यहात् केवलवेदस्तु द्विहीनो दशभिर्दिनैः ॥५॥**

आशौची ब्राह्मण अग्निहोत्री र वेदपाठी भए एक दिनमा, अग्निहोत्री र वेदपाठी दुवै नभए
दश दिनमा र वेदपाठी मात्र भए तीन दिनमा शुद्ध हुन्छ ।

**जन्मकर्मपरिभ्रष्टः सन्ध्योपासनवर्जितः ।**
**नामधारकविप्रस्य दशाहं सूतकं भवेत् ॥६॥**

जन्म-कर्मले भ्रष्ट र सन्ध्योपासना नगर्ने नाम मात्रको ब्राह्मणलाई दश दिनको सूतक हुन्छ ।

**अजा गावो महिष्यश्च ब्राह्मणी नवसूतिका ।**
**दश रात्रेण संशुध्येत् भूमिस्थं च नवोदकम् ॥७॥**

नवप्रसूता बाख्री, गाई, भैंसी र ब्राह्मणी अनि जमिनमा खसेको
वर्षाको पानी पनि दश दिनमा शुद्ध हुन्छ ।

**एकपिण्डास्तु दायादाः पृथग्दारनिकेतनाः ।**
**जन्मन्यपि विपत्तौ च भवेत्तेषाञ्च सूतकम् ॥८॥**

जो सपिण्डी वा अंशाधिकारीहरु बेग्लै श्रीमति र घर भएका हुन्छन्
तिनलाई पनि जन्ममरणमा आशौच लाग्दछ ।

**उभयत्र दशाहानि कुलस्यान्नं न भुज्यते ।**
**दानं प्रतिग्रहो होमः स्वाध्यायश्च निवर्त्तते ॥९॥**

दुवै थरी आशौचमा दश दिनसम्म त्यस कुलको अन्न खाँदैनन् । दान दिने, दान लिने, होम
गर्ने र वेद आदि शास्त्र पढ्ने काम रोकिन्छ ।

**प्राप्नोति सूतकं गोत्रे चतुर्थपुरुषेण तु ।**
**दायाद्विच्छेदमाप्नोति पञ्चमो वात्मवंशजः ॥१०॥**

गोत्रमा चौथो पुस्तासम्म सूतक चल्दछ । आफ्नो वंशमा पाँचौं पुस्ता अंशाधिकारबाट छुट्टिन्छ ।

**चतुर्थे दशरात्रं स्यात् षण्णिशाः पुंसि पञ्चमे ।**
**षष्ठे चतुरहाच्छुद्धि सप्तमे तु दिनत्रयम् ॥११॥**

पुरुषको जन्ममरणमा चौथो पुस्तासम्म दश, पाँचौं पुस्तामा छ, छैटौं पुस्तामा चार र सातौं पुस्तामा तीन दिनसम्म अशुद्धि रहन्छ ।

**पञ्चभिः पुरुषैर्युक्तः अश्राद्धेया सगोत्रिणः ।**
**ततः षट्पुरुषाद्यश्च श्राद्धे भोज्याः सगोत्रिणः ॥१२॥**

पाँच पुस्तासम्मका सगोत्रीहरु श्राद्धमा भोजन योग्य हुँदैनन् । त्यसपछि छैटौं पुस्ता देखिका सगोत्रीहरु श्राद्ध भोजनमा योग्य हुन्छन् ।

**भृग्वग्निमरणे चैव देशान्तरमृते तथा ।**
**बाले प्रेते च सन्न्यासे सद्यः शौचं विधीयते ॥१३॥**

पर्वतबाट लडेर वा अग्निले डढेर मृत्यु हुँदा, विदेशमा मृत्यु हुँदा, वालकको मृत्यु हुँदा तथा सन्यासीको मृत्यु हुँदा तुरुन्त नुहाएर शुद्धि हुन्छ ।

**दशरात्रेष्वतीतेषु त्रिरात्राच्छुद्धिरिष्यते ।**
**ततः संवत्सरादूर्ध्वं सचैलं स्नानमाचरेत् ॥१४॥**

दश दिन बितेपछि खबर पाए तीन दिनमा शुद्धि हुन्छ । एक वर्षपछि खबर पाए वस्त्रसहित नुहाउनाले शुद्धि हुन्छ ।

**देशान्तरमृतः कश्चित् सगोत्रः श्रूयते यदि ।**
**न त्रिरात्रमहोरात्रं सद्यः स्नात्वा विशुध्यति ॥१५॥**

विदेशमा मरेका कुनै सगोत्रीको समाचार सुनिएमा तीन वा एक दिनमा नभई स्नान गरेरै तुरुन्त शुद्ध हुन्छ ।

**आ त्रिपक्षात्त्रिरात्रं स्यादाषण्मासाच्च पक्षिणी ।**
**अहः संवत्सरादर्वाक् सद्यः शौचं विधीयते ॥१६॥**

पैंतालीस दिनसम्म सुने तीन रात, छ महिनासम्म सुने दुई दिनले युक्त एक रात, एक वर्षसम्म सुने एक दिन र त्यसपछि सुने नुहाउनाले नै शुद्धि हुन्छ ।

**देशान्तरगतो विप्रः प्रयासात्कालकारितात् ।**
**देहनाशमनुप्राप्तस्तिथिर्न ज्ञायते यदि ॥१७॥**
**कृष्णाष्टमी त्वमावस्या कृष्णा चैकादशी तथा ।**
**उदकं पिण्डं दानं च तत्र श्राद्धं च कारयेत् ॥१८॥**

परदेश गएका ब्राह्मण कालबाट गराइएको प्रयासले मर्न गएमा र मरेको तिथिमिति थाहा नपाइएमा कृष्णपक्षको अष्टमी, औंसी वा एकादशीका दिन जलदान, पिण्डदान दिनू र श्राद्ध गराउनू ।

**अजातदन्ता ये बाला ये च गर्भाद्विनिःसृताः ।**
**न तेषामग्निसंस्कारो नाशौचं नोदकक्रिया ॥१९॥**

जो दाँत नउम्रेका बालक छन् तिनको मृत्युमा वा भर्खरै जन्मेका बालकको मृत्युमा न दाहसंस्कार हुन्छ, न आशौच लाग्दछ, न त जलदान कर्म नै हुन्छ ।

**यदि गर्भो विपद्येत स्रवते वाऽपि योषिताम् ।**
**यावन्मासं स्थितो गर्भो दिनं तावत् स सूतकः ॥२०॥**

यदि स्त्रीहरुको गर्भ नष्ट भएमा वा गर्भस्राव भएमा, जति महिनाको गर्भको स्थिति हो त्यति नै दिन सूतक हुन्छ ।

**आ चतुर्थाद्भवेत् स्रावः पातः पञ्चमषष्ठयोः ।**
**अत ऊर्ध्वं प्रसूतिः स्याद् दशाहं सूतकं भवेत् ॥२१॥**

चार महिनासम्म गर्भस्राव हुन्छ । पाँचौं र छैटौं महिनामा गर्भपात हुन्छ । त्यसपछि

सुत्केरी हुन्छ र त्यसमा दशै दिनको सूतक हुन्छ ।

**प्रसूतिकाले संप्राप्ते प्रसवे यदि योषिताम् ।
जीवापत्ये तु गोत्रस्य मृते मातुश्च सूतकम् ॥२२॥**

स्त्रीको प्रसूति काल आएर सुत्केरी भएपछि शिशु बाँचे सबै सगोत्रीलाई सूतक हुन्छ मरे आमालाई सूतक हुन्छ ।

**रात्रामेव समुत्पन्ने मृते रजसि सूतके ।
पूर्वमेव दिनं ग्राह्यं यावन्नोदयते रविः ॥२३॥**

राती सुत्केरी भई सूर्योदय हुनु पहिले अँध्यारोमै शिशु मर्न गएमा त सूतक गणना पहिलो दिनदेखि नै गर्नु पर्दछ ।

**दन्तजातेऽनुजाते च कृतचूडे च संस्थिते ।
अग्निसंस्करणं तेषां त्रिरात्रं सूतकं भवेत् ॥२४॥**

दाँत उम्रँदा, दाँत उम्रना साथ तथा चूडाकर्म गरेपछि मृत्यु हुने बालकको अग्निमा दाह संस्कार हुन्छ र जूठो पनि तीन रात लाग्दछ ।

**आ दन्तजननात् सद्य आचूडान्नैशिकः स्मृतः ।
त्रिरात्रमाव्रतात्तेषां दशरात्रमतः परम् ॥२५॥**

दाँत उम्रने उमेरसम्मका वालकको नुहाउनाले, दाँत उम्रेर चूडाकर्म गर्ने उमेर सम्मका बालकको एक रात र ब्रतवन्ध गर्ने उमेर पुगगिसकेका बालकको मरणमा दश दिनको आशौच मानिएको छ ।

**ब्रह्मचारी गृहे येषां हूयते च हुताशने ।
सम्पर्कं न च कुर्वन्ति न तेषां सूतकं भवेत् ॥२६॥**

जसका घरमा ब्रह्मचारी छन् र होम भइरहेको छ तिनले सूतकीहरुलाई नछोए सूतक लाग्दैन ।

**सम्पर्काद् दुष्यते विप्रो नान्यो दोषोऽस्ति ब्राह्मणे ।
सम्पर्केषु निवृत्तस्य न प्रेतं नैव सूतकम् ॥२७॥**

जुठोसूतकमा ब्राह्मण सम्पर्ककारणले नै दूषित हुन्छ । सम्पर्कबाट टाढा रहने ब्राह्मणलाई जुठोसूतक लाग्दैन ।

**शिल्पिनः कारुका वैद्या दासीदासाश्च नापिताः ।**
**श्रोत्रियाश्चैव राजानः सद्यःशौचाः प्रकीर्त्तिताः ॥२८॥**

शिल्पकार, कालिगढ, दासदासी, नाई, श्रोत्रिय र राजा तुरुन्त आशौचबाट शुद्ध हुन्छन् भनी बताइएको छ ।

**सव्रतो मन्त्रपूतश्च आहिताग्निश्च यो द्विजः ।**
**राज्ञश्च सूतकं नास्ति यस्य चेच्छति पार्थिवः ॥२९॥**

व्रत लिइरहने, मन्त्रले पवित्र र अग्न्याधान गर्ने ब्राह्मणलाई तथा राजालाई वा राजाले सूतक मान्न नचाहेका व्यक्तिको सूतक लाग्दैन ।

**उद्यतो निर्धने दाने आर्त्तो विप्रो निमन्त्रितः ।**
**तदेव ऋषिभिर्द्दिष्टं यथाकालेन शुध्यति ॥३०॥**

निर्धनलाई दान दिनमा लागिपरेको र दुःखी ब्राह्मणलाई खान बोलाएको अवस्थामा कसैको मृत्यु भएमा दानको निश्चित समयमा शुद्ध हुन्छ यो ऋषिहरुको विचार हो ।

**प्रसवे गृहमेधी तु न कुर्यात् सङ्करं यदि ।**
**दशाहाच्छुध्यते माता अवगाह्य पिता शुचिः ॥३१॥**

यदि गृहस्थ व्यक्ति सूतकमा छोइएको छैन भने त्यस्तो बाबु नुहाउनाले शुद्ध हुन्छ आमा दश दिनमा शुद्ध हुन्छे ।

**सर्वेषां शावमाशौचं मातापित्रोस्तु सूतकम् ।**
**सूतकं मातुरेव स्यादुपस्पृश्य पिता शुचिः ॥३२॥**

शवले हुने आशौच सबैलाई हुन्छ । सूतक मातापितालाई लाग्दछ । वास्तवमा सूतक आमालाई मात्र लाग्छ । बाबु आचमन र स्नानले नै शुद्ध हुन्छ ।

**यदि पत्न्यां प्रसूतायां सम्पर्कं कुरुते द्विजः ।**

**सूतकन्तु भवेत्तस्य यदि विप्रः षडङ्गवित् ॥३३॥**

पत्नी सुत्केरी हुँदा यदि ब्राह्मण तिनलाई छुन्छ भने त
छ अङ्कै ज्ञाता भए पनि उसलाई सूतक लाग्दछ ।

**सम्पर्काज्जायते दोषो नान्यो दोषोऽस्ति ब्राह्मणे ।**
**तस्मात् सर्वप्रयत्नेन सम्पर्कं वर्जयेद् द्विजः ॥३४॥**

दोष सम्पर्कले उत्पन्न हुन्छ, ब्राह्मणमा अरु कुनै दोष हुँदैन । यसैले ब्राह्मण सबै प्रकारको
प्रयत्नले सम्पर्कलाई त्यागि देओस् ।

**विवाहोत्सवयज्ञेषु त्वन्तरा मृतसूतके ।**
**पूर्वं संकल्पितं द्रव्यं दीयमानं न दुष्यति ॥३५॥**

विवाह, उत्सव र यज्ञका बीचमा जुठोसूतक पर्न आए पनि पहिले देखिनै सङ्कल्प गरिएका
वस्तु दान दिँदा दोष लाग्दैन ।

**अन्तरा तु दशाहस्य पुनर्मरणजन्मनी ।**
**तावत् स्यादशुचिर्विप्रो यावत्तत् स्यादनिर्शहम् ॥३६॥**

दश दिनको जूठोसूतक भित्र अर्को जूठोसूतक पर्न आए त्यो
ननाघेसम्म (त्यही दश दिनसम्म) अशुद्ध हुन्छ ।

**ब्राह्मणार्थे विपन्नानां वन्दिगोग्रहणे तथा ।**
**आहवेषु विपन्नानामेकरात्रन्तु सूतकम् ॥३७॥**

ब्राह्मणका लागि प्राण त्याग गर्ने, कैदी, गाई समाउँदा मर्ने र
युद्धमा मर्नेको एक दिन जुठो लाग्दछ ।

**द्वाविमौ पुरुषौ लोके सूर्यमण्डलभेदकौ ।**
**परिव्राड् योगयुक्तश्च रणे चारिमुखे हतः ॥३८॥**

लोकमा यी दुई थरी पुरुष सूर्यमण्डललाई भेदन गर्ने हुन्छन् एक त योगयुक्त सन्यासी
अर्को आमुन्नेसामुन्ने लडाईँमा मर्ने क्षत्रिय ।

**यत्र यत्र हतः शूरः शत्रुभिः परिवेष्टितः ।**
**अक्षयांल्लभते लोकान् यदि क्लीवं न भाषते ॥३९॥**

यदि डरछेरुवा कुरा गर्दैन भने त जहाँजहाँ कोही वीर शत्रुले घेरिएर मारिन्छन्,
त्यहाँत्यहाँ तिनले अविनाशी लोक प्राप्त गर्दछन् ।

**जितेन लभते लक्ष्मीं मृतेनापि सुराङ्गनाः ।**
**क्षणविध्वंसिकेऽमुष्मिन् का चिन्ता मरणे रणे ॥४०॥**

युद्धमा जिते लक्ष्मी र मरे पनि अप्सरा पाइन्छ, त्यसैले केही दिनमा नासिने
यस लोकमा युद्धमा मर्ने चिन्ता किन गर्नू ? ।

**यस्तु भग्नेषु सैन्येषु विद्रवत्सु समन्ततः ।**
**परित्राता यदा गच्छेत् स च क्रतुफलं लभेत् ॥४१॥**

जो सेना भाग्दा र यताउता दौडिँदा तिनको रक्षक भई नजिकमा
जान्छ त्यसले यज्ञको फल पाउँदछ ।

**यस्यच्छेदक्षतं गात्रं शरशक्त्यृष्टिमुद्गरैः ।**
**देवकन्यासु तं वीरं गायन्ति रमयन्ति च ॥४२॥**

जसको शरीर वाण, शक्ति, ऋष्टि, मुद्गर आदि हतियारले घाइते छ
देवकन्याहरु उसको स्तुती गर्दै शान्त्वना दिन्छन् ।

**देवाङ्गनासहस्राणि शूरमायोधने हतं ।**
**नागकन्याश्च धावन्ति मम भर्त्ता भवेदिति ॥४३॥**

युद्धमा मरेका कारण स्वर्ग गएको वीरको नजिकै हजारौं देवकन्या र नागकन्या यी मेरा पति
बनून् भन्दै दौडिन्छन् ।

**ललाटदेशाद्रुधिरं हि यस्य तप्तस्य जन्तोः प्रविशेच्च वक्त्रे ।**
**तत् सोमपानेन हि तस्य तुल्यं संग्रामयज्ञे विधिवच्च दृष्टम् ॥४४॥**

युद्धमा सेकिएर जुन वीरको रगत निधारबाट बगी मुखमा पर्दछ, संग्रामरुपी त्यस यज्ञमा त्यो उसको लागि सोमपान समान हुन्छ । यो ऋषिहरुले विधिपूर्वक गरेको विचार हो ।

**यं यज्ञसंघैस्तपसा च विद्यया स्वर्गैषिणो वात्र यथैव विप्राः ।**
**क्षणेन यान्त्येव हि तत्र वीराः प्राणान् सुयुद्धेन परित्यजन्तः ॥४५॥**

ब्राह्मणहरु स्वर्गको कामनाले यस लोकमा गरेका असंख्य यज्ञ, तप र विद्या आर्जनबाट जहाँ बल्लतल्ल पुग्दछन्, उत्तम युद्धमा ज्यान गुमाउने वीरहरु त्यहाँ एक छिनमै पुग्दछन् ।

**अनाथं ब्राह्मणं प्रेतं ये वहन्ति द्विजातयः ।**
**पदेपदे यज्ञफलमानुपूर्वाल्लभन्ति ते ॥४६॥**

मरेको अनाथ ब्राह्मणको लाश बोक्ने द्विजले पाइलापाइलामा यज्ञ गरेको फल प्राप्त गर्दछ ।

**असगोत्रमबन्धुञ्च प्रेतीभूतञ्च ब्राह्मणम् ।**
**नीत्वा च दाहयित्वा प्राणायामेन शुध्यति ॥४७॥**

असगोत्री र नातेदार बाहेकका ब्राह्मणको लाश घाटमा लगे वा जलाए द्विज प्राणायाम मात्र गर्नाले शुद्ध हुन्छ ।

**न तेषामशुभं किञ्चिद् द्विजानां शुभकर्मणि ।**
**जलावगाहनात्तेषां शुद्धिः स्मृतिभिरीरिता ॥४८॥**

यो शुभकार्यमा ती द्विजको केही अशुभ हुन्न । जलमा नुहाउनाले तिनको शुद्धि हुन्छ भनी स्मृतिहरु भन्दछन् ।

**अनुगम्येच्छया प्रेतं ज्ञातिमज्ञातिमेव वा ।**
**स्नात्वा चैव तुस्पृष्ट्वाग्निं घृतं प्राश्य विशुध्यति ॥४९॥**

मृतक नातेदार हुन् वा नहुन् स्वेच्छाले मलाम जानेहरु सवस्त्र स्नान गरी अग्नि छोई घिउ खाएर शुद्ध हुन्छन् ।

**क्षत्रियं मृतमज्ञानाद् ब्राह्मणो योऽनुगच्छति ।**
**एकाहमशुचिर्भूत्वा पञ्चगव्येन शुध्यति ॥५०॥**

जो ब्राह्मण मृतक क्षत्रियको थाहा नपाएर मलाम जान्छ उ एकदिनसम्म अशुद्ध रही पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**शवञ्च वैश्यमज्ञानाद् ब्राह्मणो योऽनुगच्छति ।**
**कृत्वा शौचं द्विरात्रञ्च प्राणायामान् षडाचरेत् ॥५१॥**

जो ब्राह्मण वैश्यको थाहा नपाएर मलाम जान्छ उसले दुईदिनसम्म अशुद्ध रही प्राणायाम गर्नू ।

**प्रेतीभूतन्तु यः शूद्रं ब्राह्मणो ज्ञानदुर्बलः ।**
**नयन्तमनुगच्छेत त्रिरात्रमशुचिर्भवेत् ॥५२॥**

ज्ञानमा कमजोर जो ब्राह्मण मसानतिर लैजान लागेको शूद्रको मलाम जान्छ उ तीनरातसम्म अशुद्ध रहन्छ ।

**त्रिरात्रे तु ततः पूर्णे नदीं गत्वा समुद्रगाम् ।**
**प्राणायामशतं कृत्वा घृतं प्राश्य विशुध्यति ॥५३॥**

तीन दिन बितेपछि समुद्रसम्म बगेर पुग्ने नदीमा गएर सय चोटी प्राणायाम गरी घिउ खाएर पूर्ण शुद्ध हुन्छ ।

**विनिर्वर्त्य यदा शूद्रा उदकान्तमुपस्थिताः ।**
**द्विजैस्तदानुगन्तव्या इति धर्मविदो विधिः ॥५४॥**

जब शूद्र घाटबाट फर्केर जलका नजिकै होस् तब द्विजले उसलाई बोलाउनू । यही नै धर्म जान्नेहरुको विधि हो ।

**तस्माद् द्विजो मृतं शूद्रं न स्पृशेन्न च दाहयेत् ।**
**दृष्टे सूर्यावलोकेन शुद्धिरेषा पुरातनी ॥५५॥**

यसकारण द्विजले न मृतक शूद्रको लाश छुनू न त त्यसलाई जलाउनू । लाशलाई देखे सूर्यदर्शनले शुद्धि हुन्छ । यही नै शुद्धताको प्राचीन विधि हो ।

॥ इति श्रीपाराशरे धर्मशास्त्रे तृतीयोऽध्यायः ॥३॥

मोहनप्रसाद् सापकोटाबाट श्रीपराशरस्मृतिको तेश्रो अध्याय
नेपालीमा भावानुवाद् गरेर सकियो ।

आदितः श्लोकानां समष्टयङ्काः-८५+५५=१४०
शुरुदेखिको श्लोक संख्याः ८५+५५=१४०

## ॥ अथ चतुर्थोऽध्यायः ॥
## (चौथो अध्याय)
## ॥ अनेकविधप्रकरणप्रायश्चित्तम् ॥
## (पापको प्रायश्चित गर्ने विधि)

**अतिमानादतिक्रोधात् स्नेहाद्वा यदि वा भयात् ।**
**उद्बध्नीयात् स्त्री पुमान् वा गतिरेषा विधीयते ॥१॥**

अतिमान, अतिक्रोध, स्नेह र भयका कारणले यदि स्त्री वा पुरुषले आफूले
आफैंलाई फाँसी दिए तिनको गतिको विधि यस्तो हुन्छ ।

**पूयशोणितसंपूर्णे अन्धे तमसि मज्जति ।**
**षष्टिं वर्षसहस्राणि नरकं प्रतिपद्यते ॥२॥**

पीप र रगतले भरिएको अति अन्धकारमा डुबुल्की लाउँदछ र
साठी हजार वर्षसम्म नरकमा पर्दछ ।

**नाशौचं नोदकं नाग्निं नाश्रुपातञ्च कारयेत् ।**
**वोढारोऽग्निप्रदातारः पाशच्छेदकरास्तथा ॥**
**तप्तकृच्छ्रेण शुध्यन्तीत्येवमाह प्रजापतिः ॥३॥**

तिनको आशौच, जलदान र दाहसंस्कार तथा तिनका लागि अश्रुपात नगर्नू । त्यस्ताको लाश
बोक्ने, दाहसंस्कार गर्ने र पासो काट्नेहरु तप्तकृच्छ्र व्रतले शुद्ध हुन्छन् ।
यस्तो प्रजापतिको वचन छ ।

**गोभिर्हतं तथोद्बद्धं ब्राह्मणेन तु घातितम् ।**
**संस्पृशन्ति तुये विप्रा वोढारश्चाग्निदाश्च ये ॥४॥**
**अन्येऽपि वानुगन्तारः पाशच्छेदकराश्च ये ।**

तप्तकृच्छ्रेण शुध्यन्ति कुर्य्युर्ब्राह्मणभोजनम् ॥५॥
गाई-साँढेद्वारा मारिने, झुन्डिएर मर्ने र ब्राह्मणद्वारा मारिनेलाई जुन ब्राह्मणले छुन्छ, जसले लाश बोक्छ, जसले दागबत्ती दिन्छ, जसले पासो काट्छ र जो त्यसको मलाम जान्छन् ती तप्तकृच्छ्र व्रतले शुद्ध हुन्छन् र तिनले त्यसपछि ब्राह्मण-भोजन पनि गराऊन् ।

अनडुत्सहितां गाञ्च दद्युर्विप्राय दक्षिणाम् ।
त्र्यहमुष्णं पिबेदापस्त्र्यहमुष्णं पयः पिबेत् ।
त्र्यहमुष्णं घृतं पीत्वा वायुभक्षो दिनत्रयम् ॥६॥

साँढे समेत एक गाई ब्राह्मणलाई दक्षिणा दिनू । तीन दिनसम्म तातो पानी पिउनू, तीन दिनसम्म तातो दूध पिउनू, तीन दिनसम्म तातो घिउ पिउनू र तीन दिनसम्म वायु पिउनू ।

षट्पलं तु पिबेदम्भस्त्रिपलं पयः पिबेत् ।
पलमेकं पिबेत् सर्पिस्तप्तकृच्छ्रं विधीयते ॥७॥

छ पल (एक पलमा चार कर्ष हुन्छ) जल, तीन पल दूध र एक पल घिउ पिउनू । यो तप्तकृच्छ्र व्रत हुन्छ ।

यो वै समाचरेद्विप्रः पतितादिष्वकामतः ।
पञ्चाहं वा दशाहं वा द्वादशाहमथापि वा ॥८॥
मासार्द्धं मासमेकं वा मासद्वयमथापि वा ।
अब्दार्द्धमब्दमेकं वा तदूर्ध्वं चैव तत्समः ॥९॥

जो ब्राह्मण नचाहेर पनि पतित आदिका साथ पाँच दिन, दश दिन, बाह्र दिन, पन्ध्र दिन, एक महिना, दुइ महिना, छ महिना, एक वर्ष वा त्यसभन्दा पनि बढी घुम्दछ त्यो ब्राह्मणले मारिने, झुण्डिएर मर्ने वा गाईसाँढेले मारिनेको अन्तिम क्रिया-कर्ममा सहभागी हुने ब्राह्मण सरह दोषी हुन्छ ।

त्रिरात्रंप्रथमे पक्षे द्वितीये कृच्छ्रमाचरेत् ।
तृतीये चैव पक्षे तु कृच्छ्रं सान्तपनं चरेत् ॥१०॥
चतुर्थे दशरात्रं स्यात् पराकः पञ्चमे मतः ।
कुर्य्याचान्द्रायणं षष्ठे सप्तमे त्वैन्दवद्वयम् ॥११॥
शुद्ध्यर्थमष्टमे चैव षण्मासात् कृच्छ्रमाचरेत् ।
पक्षसंख्याप्रमाणेन सुवर्णान्यपि दक्षिणा ॥१२॥

अनजानमा पतित आदिका साथ पाँच दिन घुमिए तीन रात उपवास बस्नू, दश दिन घुमिए कृच्छ्रव्रत बस्नू, बाह्र दिन घुमिए सान्तपन कृच्छ्रव्रत गर्नू, पन्ध्र दिन घुमिए दश दिन उपवास गर्नू, एक महिना घुमिए पराक व्रत गर्नू, दुई महिना घुमिए एउटा चान्द्रायण गर्नू, छ महिना घुमिए दुईटा चान्द्रायण गर्नू र त्यसभन्दा बढी घुमिए कृच्छ्र गर्नू । घुमेका दिन समान सुनका मुद्रा दक्षिणा पनि दिनू ।

**ऋतुस्नाता तुया नारी भर्त्तारं नोपसर्पति ।**
**सा मृता नरकं याति विधवा च पुनः पुनः ॥१३॥**

परसरेर चोखिएकी नारी आफ्नो लोग्नेसँग जान्न (सुत्दिन) भने मरेर नरकमा जान्छे र पटकपटक विधवा हुन्छे ।

**ऋतौ स्नातान्तु यो भार्य्यां सन्निधौ नोपगच्छति ।**
**घोरायां भ्रूणहत्यायां युज्यते नात्र संशयः ॥१४॥**

परसरेर चोखिएकी नारीसँग नजाने (नसुत्ने) पति भयङ्कर भ्रूणहत्याको पापले युक्त हुन्छ यसमा शङ्का छैन ।

**अदुष्टापतितां भार्य्यां यौवने यः परित्यजेत् ।**
**सप्त जन्म भवेत् स्त्रीत्वं वैधव्यञ्च पुनः पुनः ॥१५॥**

निर्दोष र पतिव्रता पत्नीलाई जवानीमा जसले त्याग गर्दछ त्यसले सात जन्मसम्म स्त्री बन्नु पर्दछ र पटकपटक विधवा हुनु पर्दछ ।

**दरिद्रं व्याधितं मूर्खं भर्त्तारं या न मन्यते ।**
**सा मृता जायते व्याली वैधव्यञ्च पुनः पुनः ॥१६॥**

दरिद्र, रोगी तथा मूर्ख पतिलाई जुन स्त्री मान गर्दिन त्यो स्त्री मरेर सर्प बन्दछे र पटकपटक विधवा हुन्छे ।

**पत्यौ जीवति या नारी उपोष्य व्रतमाचरेत् ।**
**आयुष्यं हरते भर्तुः सा नारी नरकं व्रजेत् ॥१७॥**

जीवित पति हुने जो नारी उपवास बसेर व्रत बस्दछे त्यसले पतिको आयु घटाउँदछे र आफूपनि नरकमा जान्छे ।

**अपृष्ट्वा चैव भर्तारं या नारी कुरुते व्रतम् ।**
**सर्वं तद्राक्षसान् गच्छेदित्येवं मनुरब्रवीत् ॥१८॥**

पतिलाई नसोधी जो नारी व्रत गर्दछे उसले गरेका ती सबै व्रत राक्षसले पाउँदछन् भनी मनुले भनेका छन् ।

**बान्धवानां सजातीनां दुर्वृत्तं कुरुते तु या ।**
**गर्भपातं च या कुर्यान् न तां संभाषयेत् क्वचित् ॥१९॥**

जो स्त्री बन्धुबान्धव र सजातिका साथ दुष्ट आचरण गर्दछे अथवा गर्भपात गर्दछे त्योसँग कहिल्यै नबोल्नू ।

**यत् पापं ब्रह्महत्याया द्विगुणं गर्भपातने ।**
**प्रायश्चित्तं न तस्यास्ति तस्यास्त्यागो विधीयते ॥२०॥**

ब्रह्महत्याको जुन पाप हुन्छ गर्भपातको त्यसको दोब्बर पाप हुन्छ । त्यसको कुनै प्रायश्चित छैन । त्यस्ता स्त्रीलाई त्यागगर्ने विधान छ ।

**न कार्यमावसथ्येन नाग्निहोत्रेण वा पुनः ।**
**स भवेत् कर्मचाण्डालो यस्तु धर्मपराङ्मुखः ॥२१॥**

जसलाई गृहस्थकर्मसँग कुनै लिनुदिनु छैन, न अग्निहोत्रसँग कुनै प्रयोजन छ तथा जो धर्मबाट मुख फेर्दछ त्यो कर्मचाण्डाल हो ।

**ओघवाताहतं बीजं यथा क्षेत्रे प्ररोहति ।**
**क्षेत्री तल्लभते बीजं न बीजी भागमर्हति ॥२२॥**

आँधीले उडाएको बिउ जसको खेतमा खसेर उम्रन्छ त्यसबाट उम्रने फल खेतधनीले नै पाउँदछ बिउ मालिकको त्यसमा भाग लाग्दैन । (साङ्केतिक श्लोक) ।

**तद्वत् परस्त्रियाः पुत्रौ द्वौ सुतौ कुण्डगोलकौ ।**

**पत्यौ जीवति कुण्डः स्यान्मृते भर्त्तरि गोलकः ॥२३॥**

यसैगरी परस्त्रीबाट जन्मने दुई पुत्र ‘कुण्ड’ र ‘गोलक’ उसकै लोग्नेका हुन्छन् । यस्ता सन्तानलाई पति नमर्दै जन्मे ‘कुण्ड’ र मरेपछि जन्मे ‘गोलक’ भनिन्छ ।

**औरसः क्षेत्रजश्चैव दत्तः कृत्रिमकः सुतः ।**
**दद्यान्माता पिता वापि स पुत्रो दत्तको भवेत् ॥२४॥**

औरस, क्षेत्रज, दत्तक र कृत्रिम गरी चार थरी पुत्र हुन्छन् । माता वा पिताले अरु कसैलाई दिएको पुत्र ‘दत्तक’ हुन्छ ।

**परिवित्तिः परीवेत्ता यया च परिविद्यते ।**
**सर्वे ते नरकं यान्ति दातृयाजकपञ्चमाः ॥२५॥**

परिवित्ति, परिवेत्ता, विवाह गर्ने कन्या, कन्या दान गर्ने र त्यस्तो विवाह गराउने पुरोहित गरी सबैका सबै पाँचै जना नरकमा जान्छन् ।

**दाराग्निहोत्रसंयोगं यः कुर्य्यादग्रजे सति ।**
**परिवेत्ता स विज्ञेयः परिवित्तिस्तु पूर्व्वजः ॥२६॥**

दाजु छँदाछँदै विवाह, अग्न्याधान र पत्नी भोग गर्ने भाईलाई परिवेत्ता भनी जान्नू, दाजु परिवित्ति हुन्छ ।

**द्वौ कृच्छ्रौ परिवित्तिस्तु कन्यायाः कृच्छ्र एव च ।**
**कृच्छ्रातिकृच्छ्रौ दातुश्च होता चान्द्रायणञ्चरेत् ॥२७॥**

परिवित्तिले दुई कृच्छ्र, कन्याले एक कृच्छ्र, कन्यादान गर्नेले कृच्छ्र र अतिकृच्छ्र तथा पुरोहितले चान्द्रायण व्रत गर्नू ।

**कुब्जवामनषण्डेषु गद्गदेषु जडेषु च ।**
**जात्यन्धे बधिरे मुके न दोषः परिवेदने ॥२८॥**

दाजु कुप्रो, पुड्को, नपुंसक, तोते बोली बोल्ने, मूर्ख, जन्मान्ध, बहिरो र लाटो हुँदा भाईले पहिले विवाह गर्दा दोष छैन ।

**पितृव्यपुत्रः सापत्न्यः परनारीसुतस्तथा ।**
**दाराग्निहोत्रसंयोगे न दोषः परिवेदने ॥२९॥**

दाजु- ठूलोबाबु सानुबाबुको, सौतेनी आमाको वा परनारीको छोरो भए त उभन्दा पहिले विवाह गर्नाले भाईलाई विवाह, अग्निहोत्र र पत्नी सम्भोगको दोष लाग्दैन ।

**ज्येष्ठो भ्राता यदा तिष्ठेदाधानं नैव चिन्तयेत् ।**
**अनुज्ञातस्तु कुर्वीत शङ्खस्य वचनं यथा ॥३०॥**

जेठो दाजु भएसम्म अग्न्याधानको कुरा नसोच्नू । दाजुको आज्ञा लिएर गर्न सकिन्छ, यस्तो शङ्ख ऋषिको वचन छ ।

**नष्टे मृते प्रव्रजिते क्लीवे च पतिते पतौ ।**
**पञ्चस्वापत्सु नारीणां पतिरन्यो विधीयते ॥३१॥**

पति हराएमा, बितेमा, सन्यास लिएमा, नपुंसक भएमा र पतित भएमा- यी पाँच विपत्ति आउँदा नारीका लागि अन्य पतिको विधान छ ।

**मृते भर्त्तरि या नारी ब्रह्मचर्य्ये व्यवस्थिता ।**
**सा मृता लभते स्वर्गं यथा सद्ब्रह्मचारिणः ॥३२॥**

पतिको मृत्युपछि जो नारी ब्रह्मचर्यमा अटल रहन्छे त्यो नारीले मरेर उत्तम ब्रह्मचारीले पाए सरह स्वर्गलाई प्राप्त गर्दछे ।

**तिस्रः कोटयर्द्धकोटी च यानि रोमाणि मानुषे ।**
**तावत् कालं वसेत् स्वर्गे भर्त्तारं यानुगच्छति ॥३३॥**

जो नारी पतिको आज्ञा अनुसार चल्दछे, उनले मानिसका शरीरमा भएका साढे तीन करोड रौं समान समयसम्म स्वर्गमा बस्न पाउँदछे ।

**व्यालग्राही यथा व्यालं बिलादुद्धरते बलात् ।**
**एवमुद्धृत्य भर्त्तारं तेनैव सह मोदते ॥३४॥**

जसरी सपेराले बल गरी सर्पलाई दुलोबाट निकाल्दछ त्यसै गरी पतिव्रताले अरु जन्ममा पनि पतिलाई पाई उसका साथ आनन्द भोग्दछे ।

॥ इति श्रीपाराशरे धर्मशास्त्रे चतुर्थोऽध्यायः ॥४॥
मोहनप्रसाद सापकोटाबाट श्रीपराशरस्मृतिको चौथो अध्याय
नेपालीमा भावानुवाद गरेर सकियो ।

आदितः श्लोकानां समष्टयङ्काः-१४०+३४=१७४
शुरुदेखिको श्लोकसंख्या:-१४०+३४=१७४

## ॥ अथ पञ्चमोऽध्यायः ॥
## (पाँचौं अध्याय)
## ॥ प्रायश्चित्तवर्णनम् ॥
## (पापको प्रायश्चितका विधि)

**श्ववृकाभ्यां श्रृगालाद्यैर्यदि दष्टस्तु ब्राह्मणः ।**
**स्नात्वा जपेत गायत्रीं पवित्रां वेदमातरम् ॥१॥**

कुकुर, ब्वाँसो र स्यालले ब्राह्मणलाई टोके उसले नुहाएर पवित्र वेदमाता गायत्रीको जप गरोस् ।

**गवां श्रृङ्गोदके स्नातो हानद्यास्तु सङ्गमे ।**
**समुद्रदर्शनाद्वापि शुना दष्टः शुचिर्भवेत् ॥२॥**

कुकुरले टोके गाईको सिङको पानीले वा महानदीको सङ्गममा नुहाउनू ।
समुद्रको दर्शनले पनि शुद्ध हुन्छ ।

**वेदविद्याव्रतस्नातः शुना दष्टस्तु ब्राह्मणः ।**
**स हिरण्योदके स्नात्वा घृतं प्राश्य विशुध्यति ॥३॥**

वेदविद्याव्रत लिएर नुहाएको ब्राह्मणलाई कुकुरले टोके उसले सुनपानीले नुहाउनू र घिउ खानू, शुद्ध हुन्छ ।

**सव्रतस्तु शुना दष्टस्त्रिरात्रं समुपोषितः ।**

**घृतं कुशोदकं पीत्वा व्रतशेषं समापयेत् ॥४॥**

व्रत बसिरहेको ब्राह्मणलाई कुकुरले टोके तीन रात
उपवास बसी घिउ र कुशपानी पिई बाँकी व्रत सक्नू ।

**अव्रतः सव्रतो वापि शुना दष्टो भवेद् द्विजः ।**
**प्रणिपत्य भवेत् पूतो विप्रैश्चानुनिरीक्षतः ॥५॥**

व्रत बसेका वा नबसेका ब्राह्मणलाई कुकुरले टोके (अरु ब्राह्मणहरुलाई)
प्रणाम गर्नू, तिनले देखेपछि पवित्र हुन्छ ।

**शुना घ्रातावलीढस्य नखैर्विलिखितस्य च ।**
**अद्भिः प्रक्षालानाच्छुद्धिरग्निना चोपचूलनम् ॥६॥**

कुकुरले जुठो हालेको वा नङ्ग्राले चिथोरेको (पदार्थ) शुद्धि पानीले पखालेर वा तताउनाले हुन्छ ।

**शुना च ब्राह्मणी दृष्टा जम्बुकेन वृकेण वा ।**
**उदितं सोमनक्षत्रं दृष्ट्वा सद्यः शुचिर्भवेत् ॥७॥**

बाहुन्नीलाई कुकुर, स्याल वा ब्वाँसोले टोके उदाएका चन्द्रमाको दर्शनले तुरुन्त शुद्धि हुन्छ ।

**कृष्णपक्षे यदा सोमो न दृश्येत कदाचन ।**
**यां दिशां व्रजते सोमस्तां दिशञ्चावलोकयेत् ॥८॥**

कृष्णपक्षमा चन्द्रमा नदेखिए जुन दिशामा चन्द्रमा जान्छन् त्यही दिशाको अवलोकन गर्नू ।

**असद्ब्राह्मणके ग्रामे शुना दृष्टस्तु ब्राह्मणः ।**
**वृषं प्रदक्षिणीकृत्य सद्यः स्नानाद्विशुध्यति ॥९॥**

दुष्ट ब्राह्मणका गाउँमा यदि कुकुरले टोक्दछ भने साँढेको प्रदक्षिणा गरी नुहाउनाले तुरुन्त राम्ररी शुद्ध हुन जान्छ ।

**चाण्डालेन श्वपाकेन गोभिर्विप्रैर्हतो यदि ।**
**आहिताग्निर्मृतो विप्रो विषेणात्महतो यदि ॥**

**दहेत्रं ब्राह्मणं विप्रो लोकाग्नौ मन्त्रवर्जितम् ॥१०॥**

अग्निहोत्री ब्राह्मण यदि चाण्डाल, श्वपाक, गाई र ब्राह्मणद्वारा मारिएको छ भने वा उसले विष खाएर आत्महत्या गरेको छ भने त ब्राह्मणले मृतकलाई
लौकिक मन्त्र बिना नै दाहसंस्कार गरुन् ।

**स्पृष्ट्वा चोह्य च दग्ध्वा च सपिण्डेषु च सर्व्वथा ।**
**प्राजापत्यं चरेत् पश्चाद्विप्राणामनुशासनात् ॥११॥**

यदि मृतक अग्निहोत्री सपिण्डी भित्रको हो भने त उसको लाशलाई छुने, बोक्ने र दाह संस्कार गर्ने सबैले काम गरीसकेर ब्राह्मणका आज्ञाले प्राजापत्य व्रत गरुन् ।

**दग्ध्वास्थीनि पुनर्गह्य क्षीरैः प्रक्षालयेद् द्विजः ।**
**पुनर्द्दहेत् स्वकाग्नौ तन्मन्त्रेण च पृथक् पृथक् ॥१२॥**

जलाइएका अस्थिलाई फेरी लिएर ब्राह्मणले त्यसलाई दूधले धोओस् ।
फेरी आफ्नो अग्निमा आफ्नो मन्त्रले बेग्लाबेग्लै जलाओस् ।

**आहिताग्निर्द्विजः कश्चित् प्रवसन् कालचोदितः ।**
**देहनाशमनुप्राप्तस्तस्याग्निर्वर्तते गृहे ॥**
**प्रेताग्निहोत्रसंस्कारः श्रूयतामृषिसत्तमाः ॥१३॥**

अग्न्याधान गर्ने कुनै ब्राह्मण परदेश गएका बेलामा कालगतिले मर्न गएमा र अग्नि उसका घरमा रहिरहेको अवस्थामा त्यस मृतकको अग्निहोत्र र संस्कारका विषयमा के हुन्छ भन्ने विषयमा हे श्रेष्ठ ऋषिहरु ! सुन्नुहोस् ।

**कृष्णाजिनं समास्तीर्य्य कुशैश्च पुरुषाकृतिम् ।**
**षट् शतानि शतञ्चैव पलाशानाञ्च वृन्तकम् ॥१४॥**
**चत्वारिंशच्छिरे दद्यात् शतं कण्ठे तु विन्यसेत् ।**
**बाहुभ्यां दशकं दद्यादङ्गुलीषु दशैव तु ॥१५॥**
**शतं तु जघने दद्यात् द्विशतं तूदरे तथा ।**
**अष्टौ वृषणयोर्दद्यात् पञ्च मेढ्रे च विन्यसेत् ॥१६॥**
**एकविंशतिमूरुभ्यां द्विहतं जानुजङ्घयोः ।**
**पादांगुष्ठेषु दद्यात् षट् यज्ञपात्रं ततो न्यसेत् ॥१७॥**

कालो मृगको छाला ओछ्याएर त्यसमाथि कुशको पुरुषको आकृति बनाउनू र त्यसमा पलाँशका सात सय भेट्ना लगाउनू । चालीस वटा शिरमा राख्नू । सउ वटा घाँटीमा राख्नू । दुईटै भुजामा दश । दश वटा राख्नू । हातगोडाका औंलामा पनि दश । दश वटा राख्नू । कम्मरको अघिल्लो भागमा सय वटा राख्नू । पेटमा दुई सय राख्नू । अण्डकोशमा आठ, जननेन्द्रियमा पाँच र दुवै तिघ्रामा एक्काइस वटा राख्नू । दुवै घुँडा र दुबै जाँघमा दुई सय, गोडाको दुवै बुढी औंलामा छ वटा राख्नू । त्यसपछि यज्ञपात्रहरु राख्नू ।

**शम्यां शिश्ने विनिःक्षिप्य अरणीं वृषणे तथा ।**
**जुहूं च दक्षिणहस्ते वामे तूपभृतं न्यसेत् ॥१८॥**
**पृष्ठे तूलूखलं दद्यात् पृष्ठे च मुसलं न्यसेत् ।**
**निक्षिप्योरसि दृशदं तण्डुलाज्यतिलान्मुखे ॥१९॥**
**श्रोत्रे च प्रोक्षणीं दद्यादाज्यस्थालीञ्च चक्षुषोः ।**
**कर्णे नेत्रे मुखे घ्राणे हिरण्यशकलं क्षिपेत् ॥२०॥**

शमीलाई लिङ्गमा राखेर त्यस्तै प्रकारले अण्डकोशमा अरणीलाई राख्नू । जुहूलाई दाहिने हातमा र उपभृतलाई देब्रे हातमा राख्नू । पिठिउँमा ओखल राखेर मुसल पनि पिठिउँमै राख्नू । वृषद्लाई छातीमाथि राखेर चामल, घिउ र तिल मुखमा हाल्नू । प्रोक्षणीलाई कानमा र घृतपात्रलाई आँखाहरु माथि राख्नू । कान, आँखा, मुख र नाकमा सुनका टुक्रा राख्नू ।

**अग्निहोत्रोपकरणं गात्रे शेषं प्रविन्यसेत् ।**
**असौ स्वर्गाय लोकाय स्वाहेति च घृताहुतीः ॥२१॥**
**दद्यात् पुत्रोऽथवा भ्राता ह्यन्ये वापि स्वधर्मिणः ।**
**यथा दहनसंस्कारस्तथा कार्य्यं विचक्षणैः ॥२२॥**

अग्निहोत्रका बाँकी उपकरण पनि मृतकका शरीरमा राख्नू । “असौ (अमुक) स्वर्गीय लोकाय स्वाहा” भनी छोरो वा भाईले घिउको आहुति हाल्नू र अरु स्वधर्मीले पनि हाल्नू । जसरी दाहसंस्कार हुन्छ त्यसरी नै विद्वानहरुले सबै कर्म गर्नु पर्दछ ।

**इदृशन्तु विधिं कुर्य्याद् ब्रह्मलोके गतिर्ध्रुवम् ।**
**ये दहन्ति द्विजास्तन्तु तेयान्ति परमां गतिम् ॥२३॥**

यसरी दाहसंस्कार गरे मृतकको ब्रह्मलोकको गति निश्चित हुन्छ । जो द्विज यसरी मृतकलाई जलाउँछन् तिनले पनि परम गति प्राप्त गर्दछन् ।

**अन्यथा कुर्व्वते किञ्चिदात्मबुद्धिप्रबोधिताः ।**
**भवन्त्यल्पायुषस्ते वै पतन्ति नरके ध्रुवम् ॥२४॥**

जो आफ्नो बुद्धिले सोची शास्त्रले बताएको विपरित गर्दछन् ती अल्प आयुका भई निश्चय नै नरकमा पर्दछन् ।

॥ इति श्रीपाराशरे धर्मशास्त्रे पञ्चमोऽध्यायः ॥५॥
**मोहनप्रसाद सापकोटाबाट श्रीपराशरस्मृतिको पाँचौं अध्याय**
**नेपालीमा भावानुवाद गरेर सकियो ।**

✷

आदितः श्लोकानां समष्टयङ्काः-१७४+२४=१९८
शुरुदेखिको श्लोकसंख्याः-१७४+२४=१९८

✷

## ॥ अथ षष्ठोऽध्यायः ॥
## (छैटौं अध्याय)
## ॥ प्राणिहत्याप्रायश्चित्तवर्णनम् ॥
## (जीवहत्याको प्रायश्चित)

**अतः परं प्रवक्ष्यामि प्राणिहत्यासु निष्कृतिम् ।**
**पराशरेण पूर्व्वोक्तां मन्वर्थेऽपि च विस्मृतम् ॥१॥**

यसपछि म प्राणि हत्याको त्यो प्रायश्चितका बारेमा वर्णन गर्नेछु जुन् पहिले पराशरले बताएका त थिए तर मनुले जसलाई छोडेका थिए ।

**हंससारसक्रौञ्चांश्च चक्रवाकं सकुक्कुटम् ।**
**जालपादांश्च शरभमहोरात्रेण शुध्यति ॥२॥**

हाँस, सारस, कन्याङकुरुङ, चखेवा, कुखुरा, जालपाद[१] र शरभ[२] मारे एक दिनरातमा शुद्ध हुन्छ ।
*नोटः-१. औंलाका बीचमा पातलो छाला हुने । २. पौराणिक कालको सिँहभन्दा बलियो र धेरै माथि उफ्रन सक्ने जनावर ।*

**वलाकाटिट्टिभानाञ्च शुकपारावतादिनाम् ।**
**आटीनाञ्च वकानाञ्च शुध्यते नक्तभोजनात् ॥३॥**

एक जातको बकुल्ला, हुटिट्याउँ, सुँगा, परेवा, आटी (चराविशेष) र बकुल्ला मारे केवल रातमा भोजन गरे शुद्ध हुन्छ ।

**भासकाककपोतानां च सारीतित्तिरिघातकः ।**
**अन्तर्जले उभे सन्ध्ये प्राणयामेन शुध्यति ॥४॥**

गिद्ध, काग, परेवा, मैना र तित्रो मार्नेले दुवै सन्ध्यामा जलभित्र प्राणायाम गर्नाले शुद्धि हुन्छ ।

**गृध्रश्येनशिखिग्राहचाषोलूकनिपातने ।**
**अपक्वाशी दिनं तिष्ठेत्त्रिकालं मारुताशनः ॥५॥**

गिद्ध, बाज, मुजुर, गरुड, नीलकण्ठ चरा र उल्लू मारे दिनभरी पकाइएको खाना नखानु तथा तीनै काल वायुभक्षण गर्नू ।

**वल्गुलीचटकानाञ्च कोकिलाखञ्जरीटकान् ।**
**लावकारक्तपादांश्च शुध्यन्ते नक्तभोजनात् ॥६॥**

चमेरा, भङेरा, कोइली, बाहुनीचरी, बट्टाई र रातोखुट्टे चरा मारे रातमा मात्र भोजन गर्नाले शुद्ध हुन्छ ।

**कारण्डवचकोराणां पिङ्गलाकुररस्य च ।**
**भारद्वाजनिहन्ता च शुध्यते शिवपूजनात् ॥७॥**

पानीहाँस, च्याँखुरा, सानो लाटोकोसेरो, न्याउली चरो र भद्राई चरो मारे शिवको पूजा गर्नाले शुद्ध हुन्छ ।

**भेरुण्डश्येनभासांश्च पारावतकपिञ्जलान् ।**
**पक्षिणामेव सर्वेषामहोरात्रेण शुध्यति ॥८॥**

भेरुण्ड (भारुण्ड चरा), काग, गिद्ध, परेवा तथा कपिञ्जल (चातक वा सेतो तित्रो) आदि चरा मार्दा एक दिनरातको उपवासले शुद्ध हुन्छ ।

**हत्वा नकुलमार्जारसर्पाजगरडुण्डुभान् ।**
**कृशरं भोजयेद्विप्रान् लोहदण्डञ्च दक्षिणाम् ॥९॥**

न्याहुरी, बिरालो, सर्प, अजिङ्गर र विष नलाग्ने दुई मुखे सर्प मार्नेले ब्राह्मणलाई खिचडी खुवाउनू र फलामको दण्ड दक्षिणा दिनू ।

**शल्लकीशशकागोधामत्स्यकूर्म्माभिपातने ।**
**वृन्ताकफलभोक्ता च ह्यहोरात्रेण शुध्यति ॥१०॥**

दुम्सी, खरायो, गोही, माछा र कछुवा मारे भण्टा खाएर एक दिनरातको व्रत बस्नाले शुद्ध हुन्छ ।

**वृकजम्बुकऋक्षाणां तरक्षूणाञ्च घातने ।**
**तिलप्रस्थं द्विजे दद्याद्वायुभक्षो दिनत्रयम् ॥११॥**

हुँडार, स्याल, भालु र ब्वाँसो मारे ब्राह्मणलाई एक प्रस्थ (चार कुडव) तिल दान गर्नू र तीन दिनसम्म वायुमात्र खानू ।

**गजगवयतुरङ्गाणां महिषोष्ट्रनिपातने ।**
**शुध्यते सप्तरात्रेण विप्राणां तर्पणेन च ॥१२॥**

हाती, गवय[३], घोडा, भैंसी र ऊँट मारे सात दिनसम्म व्रत बसी ब्राह्मणलाई तृप्त पार्नाले शुद्ध हुन्छ ।
*नोट : ३. माल नभएको गाईजस्तै हुने जनावर, नीलगाई ।*

**कुरङ्गं वानरं सिंहं चित्रं व्याघ्रं च घातयेत् ।**
**शुध्यते स त्रिरात्रेण विप्राणां तर्पणेन च ॥१३॥**

मृग, वानर, सिंह, चितुवा र बाघ मारे तीन दिनसम्म व्रत बसी ब्राह्मणलाई तृप्त पार्नाले शुद्ध हुन्छ ।

**मृगं रुरुं वराहञ्च अज्ञानाद्यस्तु घातयेत् ।**
**अफालकृष्टमश्नीयादहोरात्रेण शुध्यति ॥१४॥**

मृग, रुरुमृग र सुँगुर अनजानमा मार्नेले हलो नचलाई उब्जिएको अन्न खानू । यसरी एक दिनरातको व्रतले शुद्ध हुन्छ ।

**एवं चतुष्पदानाञ्च सर्वेषां वनचारिणाम् ।**
**अहोरात्रोषितस्तिष्ठेज् जपन् वै जातवेदसम् ॥१५॥**

यसप्रकारले वनमा घुम्ने सबै चौपायाको हत्या हुँदा "जातवेदस"
मन्त्र जप्दै एक दिनरात उपवास बस्नू ।

**शिल्पिनं कारुकं शूद्रं स्त्रियं वा यस्तु घातयेत् ।**
**प्राजापत्यद्वयं कुर्य्याद् वृषैकादश दक्षिणा ॥१६॥**

शिल्पकार, कालिगढ, शूद्र वा स्त्री मार्नेले प्राजापत्य व्रत गरी एघार वटा साँढे दक्षिणामा दिनू ।

**वैश्यं वा क्षत्रियं वापि निर्दोषमभिघातयेत् ।**
**सोऽतिकृच्छ्रद्वयं कुर्य्याद् गोर्विंशं दक्षिणा ददेत् ॥१७॥**

जसले कुनै निर्दोष वैश्य वा क्षत्रियलाई मार्दछ उसले दुई वटा अतिकृच्छ्र
व्रत गरी बीस गाई वा साँढे दक्षिणा देओस् ।

**वैश्यं शूद्रं क्रियासक्तं विकर्मस्थं द्विजोत्तमम् ।**
**हत्वा चान्द्रायणं कुर्य्याद्द्याद् गोत्रिंशद् दक्षिणाम् ॥१८॥**

काम गरिरहेका वैश्य वा शूद्रलाई तथा दुष्कर्मी ब्राह्मणलाई मारेमा
चान्द्रायण व्रत गरी तीस गाई वा साँढे दक्षिणा देओस् ।

**चाण्डालं हतवान् कश्चिद् ब्राह्मणो यदि कञ्चन ।**
**प्राजापत्यं चरेत् कृच्छ्रं गोद्वयं दक्षिणां ददेत् ॥१९॥**

यदि कुनै ब्राह्मणले चाण्डाललाई मार्‍यो भने उसले प्राजापत्य कृच्छ्र व्रत
गरी दुई गाई वा साँढे दक्षिणा देहोस् ।

**क्षत्रियेणापि वैश्येन शूद्रणैवेतरेण वा ।**
**चाण्डालवधसंप्राप्तः कृच्छ्रार्द्धेन विशुध्यति ॥२०॥**

क्षत्रिय, वैश्य, शूद्र वा अरु कसैबाट चाण्डालको हत्या हुन गए,
उ अर्द्धकृच्छ्र व्रतले राम्ररी शुद्ध हुन्छ ।

चौराः श्वपाकचाण्डाला विप्रेणापि हता यदि ।
अहोरात्रोपवासेन प्राणायामेन शुध्यति ॥२१॥

चोर, श्वपाक र चाण्डाल ब्राह्मणद्वारा मारिन गए ब्राह्मण दिनरात उवपास बसी प्राणायाम गर्नाले शुद्ध हुन्छ ।

श्वपाकं वापि चाण्डालं विप्रः सम्भाषते यदि ।
द्विजसम्भाषणं कुर्य्याद् गायत्री वा सकृज्जपेत् ॥२२॥

ब्राह्मण श्वपाक र चाण्डालसँग कुराकानी गर्दछ भने शुद्धताका लागि उसले द्विजसँग कुराकानी गर्नू वा एक पटक गायत्री जप गर्नू ।

चाण्डालैः सह सुप्तन्तु त्रिरात्रमुपवासयेत् ।
चाण्डालैकपथङ्गत्वा गायत्रीस्मरणाच्छुचिः ॥२३॥

ब्राह्मण चाण्डालसँग सुतेमा उसले तीनरात उपवास बस्नू र उसँगै बाटोमा हिँडे गायत्री सम्भनू, पवित्र हुन्छ ।

चाण्डालदर्शने सद्य आदित्यमवलोकयेत् ।
चाण्डालस्पर्शने चैव सचैलं स्नानमाचरेत् ॥२४॥

चाण्डालको दर्शन भए तुरुन्त सूर्यको दर्शन गर्नू र छोइए सवस्त्र स्नान गर्नू ।

चाण्डालखातवापीषु पीत्वा सलिलमग्रजः ।
अज्ञानाच्चैव नक्तेन त्वहोरात्रेण शुध्यति ॥२५॥

माथ्लो जातका मानिस अनजानमा चाण्डालले खनेको पोखरी आदिमा पानी पिउँदछन् भने ती एक दिनरातको व्रतले शुद्ध हुन्छन् ।

चाण्डालभाण्डसंस्पृष्टं पीत्वा कूपगतं जलम् ।
गोमूत्रयावकाहारस्त्रिरात्राच्छुद्धिमाप्नुयात् ॥२६॥

चाण्डालको भाँडाले छोएको कुवामा रहेको पानी पिए गहुँत र

जौ खाएर ती रातमा पवित्रता प्राप्त गर्दछ ।

**चाण्डालोदकभाण्डे तु अज्ञानात् पिबते जलम् ।**
**तत्क्षणात् क्षिप्ते यस्तु प्राजापत्यं समाचरेत् ॥२७॥**

अनजानमा चाण्डालको भाँडामा पानी पिएर थाहा पाउनासाथ थुकेमा प्राजापत्य व्रत गर्नू ।

**यदि न क्षिपते तोयं शरीरे यस्य जीर्य्यति ।**
**प्राजापत्यं न दातव्यं कृच्छ्रं सान्तपनञ्चरेत् ॥२८॥**

यदि त्यो पानी फाल्दैन र शरीरमा पच्दछ भने त प्राजापत्य व्रत नगराउनू
उसले सान्तपन कृच्छ्र व्रत गर्नु पर्दछ ।

**चरेत्सान्तपनं विप्रः प्राजापत्यन्तु क्षत्रियः ।**
**तदर्द्धन्तु चरेद्वैश्यः पादं शुद्रस्य दापयेत् ॥२९॥**

ब्राह्मणले सान्तपन, क्षत्रियले प्राजापत्य, प्राजापत्यको आधा वैश्यले र
प्राजापत्यको एक चौथाई शूद्रले गर्नू ।

**भाण्डस्थमन्त्यजानान्तु जलं दधि पयः पिबेत् ।**
**ब्राह्मणः क्षत्रियो वैश्यः शूद्रश्चैव प्रमादतः ॥३०॥**
**ब्रह्मकूर्चोपवासेन द्विजातीनान्तु निष्कृतिः ।**
**शूद्रस्य चोपवासेन तथा दानेन शक्तितः ॥३१॥**

जानीजानी अन्त्यजातिको भाँडामा राखिएको जल, दही वा दूध पिउँदछन् भने द्विजले
पश्चातापस्वरुप पञ्चगव्य खानू र उपवास बस्नू तथा शूद्रले पनि उवपास बस्नू वा शक्ति अनुसार
दान दिनू, पवित्र हुन्छ ।

**ब्राह्मणो ज्ञानतो भुङ्क्ते चाण्डालान्नं कदाचन ।**
**गोमूत्रयावकाहारद्दशरात्रेण शुध्यति ॥३२॥**

जानीजानी चाण्डालको अन्न खाने ब्राह्मण गहुँत र जौ को आहारले दश दिनमा शुद्ध हुन्छन् ।

**एकैकं ग्रासमश्नीयाद् गोमूत्रयावकस्य च ।**

**दशाहं नियमस्थस्य व्रतं तत्र विनिर्द्दिशेत् ॥३३॥**

उसले गहुँत र जौको आहार एक-एक गाँस खानू । यस विषयमा नियममा रहेकाका लागि दश दिनको व्रत राम्ररी बताउनू ।

**अविज्ञातश्च चाण्डालः सन्तिष्ठेत्तस्य वेश्मनि ।**
**विज्ञाते तूपसंन्यस्य द्विजाः कुर्वन्त्यनुग्रहम् ॥३४॥**

थाहा नपाइकन द्विजका घरमा बसेको चाण्डाललाई थाहा पाएपछि निकाल्नू उसलाई दया गरेको मानिन्छ ।

**ऋषिवक्त्राच्छ्रुत्वाधर्म्मास्त्रायन्ते वेदपावनाः ।**
**पतन्तमुद्धरेयुस्ते धर्मज्ञाः पापसङ्कटात् ॥३५॥**

ऋषिका मुखबाट सुनिने पवित्र ज्ञानले धर्म रक्षा गर्दछ । जसले यो जान्दछन् तिनले धर्मभिमुख पापरुपी सङ्कटबाट उद्धार गर्दछन् ।

**दध्ना च सर्पिषा चैव क्षीरगोमूत्रयावकम् ।**
**भुञ्जीत सह भृत्यैश्च त्रिसन्ध्यमवगाहनम् ॥३६॥**

गहुँत तथा जौ खाएर दही, घीउ र दूधका साथ कुटुम्ब सहित खानू अनि तीनै सन्ध्यामा नदी वा तलाउमा नुहाउनू ।

**त्र्यहं भुञ्जीत दध्ना च त्र्यहं भुञ्जीत सर्पिषा ।**
**त्र्यहं क्षीरेण भुञ्जीत एकैकेन दिनत्रयम् ॥३७॥**

तीन दिन दहीसँग, तीन दिन घीउसँग, तीन दिन दूधसँग खानू । यसरी एकएक थोकसँग तीन दिन खानू ।

**भावदुष्टं न भुञ्जीयान्नोच्छिष्टं कृमिदूषितम् ।**
**त्रिपलं दधिदुग्धस्य पलमेकन्तु सर्पिषः ॥३८॥**

दूषित विचारको नखानू, जूठो र कीराले दूषित नखानू । तीन पला दहीदूध र घीउ एक पला खानू ।

**भस्मना तु भवेच्छुद्धिरुभयोस्ताम्रकांस्ययोः ।**
**जलशौचेन वस्त्राणां परित्यागेन मृण्मयम् ॥३९॥**

तामा र काँसको भाँडाको खरानीले, कपडाको पानीमा धुनाले र माटाका भाँडाको शुद्धि त्यसलाई त्याग गर्नाले हुन्छ ।

**कुसुम्भगुडकार्पासलवणं तैलसर्पिषी ।**
**द्वारे कृत्वा तु धान्यादि गृहे दद्याद्धुताशनम् ॥४०॥**

कुसुम्भ, शखर, कपास, नुन, तेल, घिउ र अनाज ढोकामा राखी घरमा आगो लगाउनू ।

**एवं शुद्धस्ततः पश्चात् कुर्य्याद् ब्राह्मणभोजनम् ।**
**त्रिशतं गा वृषञ्चैकं दद्याद् विप्रेषु दक्षिणाम् ॥४१॥**

यसरी शुद्ध हुन्छ । त्यसपछि ब्राह्मण भोजन गराउनू । तीन सय गाई र एक साँढे ब्राह्मणलाई दक्षिणा दिनू ।

**पुनर्लेपनखातेन होमजप्येन शुध्यति ।**
**आधारेण च विप्राणां भूमिदोषो न विद्यते ॥४२॥**

दोहोऱ्याएर लिप्नाले, खोस्रनाले, होम तथा जप गर्नाले र ब्राह्मणको आधार बन्नाले (बस्नाले) भूमि शुद्ध हुन्छ । भूमिमा दोष रहँदैन ।

**चाण्डालैः सह सम्पर्कः मासं मासार्धमेव वा ।**
**गोमूत्र यावकाहारो मासार्द्धेन विशुध्यति ॥४३॥**

एक महिना वा पन्ध्र दिनसम्म चाण्डालसँग सम्पर्क भए गहुँत र जौको आहार खाई पन्ध्र दिनमै पूर्ण शुद्ध हुन्छ ।

**रजकी चर्मकारी च लुब्धकी वेणुजीवनी ।**
**चातुर्वर्ण्यगृहे यस्य ह्यज्ञानादधितिष्ठति ॥४४॥**
**ज्ञात्वा तु निष्कृतिं कुर्य्यात् पूर्वोक्तस्यार्द्धमेव तु ।**
**गृहदाहं न कुर्वीत शेषं सर्वञ्च कारयेत् ॥४५॥**

धोबीकी स्त्री, चमारकी स्त्री, व्याधाकी स्त्री र बाँसको काम गर्नेकी स्त्री चारै वर्णका घरमा थाहा नपाई बास बसे थाहा पाए पछि गहुँत र जौको आहार सात दिनसम्म खानू । घर नजलाउनू । बाँकी माथि बताइएका सबै कार्य गर्नू ।

**गृहस्याभ्यन्तरे गच्छेच्चाण्डालो यस्य कस्यचित् ।**
**तस्माद् गृहाद्विनिःसार्य मृद्भाण्डानि विसर्जयेत् ॥४६॥**

कसैको घरभित्र चाण्डाल पसे उसलाई घरबाट निकाली घरमा रहेका माटाका भाँडा घरबाहिर फ्याल्नू ।

**रसपूर्णन्तु मृद्भाण्डं न त्यजेच्च कदाचन ।**
**गोरसेन तुसंमिश्रैर्जलैः प्रोक्षेत् समन्ततः ॥४७॥**

घिउ दूध जस्ता रसले भरिएका माटाका भाँडा कहिल्यै नफ्याल्नू । गोरस (दूध) मिसिएको जल घरको सबैतिर छर्कनू ।

**ब्राह्मणस्य व्रणद्वारे पूयशोणितसम्भवे ।**
**कृमिरुत्पद्यते यस्य प्रायश्चित्तं कथं भवेत् ॥४८॥**

कुनै ब्राह्मणको घाउको मुखमा पीप वा रगत आउँछ र कीरा पर्दछ भने के गरी प्रायश्चित हुन्छ ? ।

**गवां मूत्रपुरीषेण दध्ना क्षीरेण सर्पिषा ।**
**त्र्यहं स्नात्वा च पीत्वा च कृमिदुष्टः शुचिर्भवेत् ॥४९॥**

गहुँत, गोबर, दही, दूध र घिऊ मिसाएर तीन दिन नुहाई त्यही पिउनाले कीराले दोषी भएको ब्राह्मण शुद्ध हुन्छ ।

**क्षत्रियोऽपि सुवर्णस्य पञ्च माषान् प्रदापयेत् ।**
**गोदक्षिणान्तु वैश्यस्याप्युपवासं विनिर्दिशेत् ॥५०॥**

क्षत्रियलाई पाँच माषा सुन दान गर्न लगाउनू । वैश्यलाई गाई दान गर्न र उपवास बस्न लगाउनू ।

**शूद्राणां नोपवासः स्याच्छूद्रो दानेन शुध्यति ।**
**ब्राह्मणांस्तु नमस्कृत्य पञ्चगव्येन शुध्यति ॥५१॥**

शूद्रको उपवासको व्यवस्था छैन उ दानले नै वा ब्राह्मणलाई
नमस्कार गरी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**अच्छिद्रमिति यद्वाक्यं वदन्ति क्षितिदेवताः ।**
**प्रणम्य शिरसा धार्य्यमग्निष्टोमफलं हि तत् ॥५२॥**

ब्राह्मणले 'दोष छैन' भनेको कुरा उनलाई प्रणाम गरी
अपनाउनू किनकि उनि अग्निष्टोम यज्ञका फलदाता हुन् ।

**व्याधिव्यसनिनि श्रान्ते दुर्भिक्षे डामरे तथा ।**
**उपवासो व्रतो होमो द्विजसम्पादितानि वा ॥५३॥**

रोगव्याधिको सङ्कटमा, थकानमा, अकाल र अफसोसका समयमा ब्राह्मणबाट
सम्पन्न गराइएका उपवास, होम, व्रत आदि कर्महरु दोषरहित हुन्छन् ।

**अथवा ब्राह्मणास्तुष्टाः स्वयं कुर्वन्त्यनुग्रहम् ।**
**सर्वान् कामानवाप्नोति द्विजसम्पादितैरिह ॥५४॥**

आफैं प्रसन्न भएका ब्राह्मणले कृपा गर्दछन् । यो लोकमा ब्राह्मणबाट
सम्पन्न गराइएका कर्मले मनुष्यका सबै इच्छा पूर्ण गर्दछ ।

**दुर्ब्बलेनुग्रहः कार्य्यस्तथा वै बालवृद्धयोः ।**
**अतोऽन्यथा भवेद्दोषस्तस्माननानुग्रहः स्मृतः ॥५५॥**

दुर्बल तथा बालक र वृद्धमाथि कृपा गर्नु पर्दछ । यसको विपरीत गर्नाले
दोष उत्पन्न हुने हुनाले अरुमाथि कृपा गरिँदैन ।

**स्नेहाद्वा यदि वा लोभाद्भयादज्ञानतोऽपि वा ।**
**कुर्वन्त्यनुग्रहं ये वै तत्पापं तेषु गच्छति ॥५६॥**

मायाले, लोभले वा डरले सोचबिचारै नगरी कृपा गर्नेहरु

त्यसबाट उत्पन्न हुने पाप आफैले बोक्दछन् ।

**शरीरस्यात्यये प्राप्ते वदन्ति नियमन्तु ये ।**
**महत्कार्य्योपरोधे न स्वस्थस्य कदाचन ॥५७॥**

शरीरलाई जोखिम हुँदा जो (ब्राह्मण) नियमका कुरा गर्दछन् र कार्यमा ठूलो वाधा आउने डरले स्वस्थ मानिसका लागि जो नियमका कुरा गर्दैनन् (ती ठीक गर्दछन्) ।

**स्वस्थस्य मूढाः कुर्वन्ति नियमन्तु वदन्ति ये ।**
**ते तस्य विघ्नकर्त्तारः पतन्ति नरकेऽशुचौ ॥५८॥**

जो स्वस्थ मानिसका लागि (छूटसम्बन्धी) नियम बताउँछन् वा गर्न लगाउँदछन्, ती मूर्ख उसको (वास्तविक धर्म) कार्यमा व्यवधान गर्ने मानिन्छन्, त्यसैले घोर नरकमा पर्दछन् ।

**स्वयमेव व्रतं कृत्वा ब्राह्मणं योवमन्यते ।**
**वृथा तस्योपवासः स्यान्न स पुण्येन युज्यते ॥५९॥**

जो स्वयं व्रत बसी ब्राह्मणलाई तिरस्कार गर्दछ त्यसले बस्ने व्रत व्यर्थ हुन्छ र उसलाई पुण्य प्राप्त हुँदैन ।

**स एव नियमो ग्राह्यो यमेकोक्पि वदेद् द्विजः ।**
**कुर्य्याद्वाक्यं द्विजानाञ्च अकुर्वन् ब्रह्महा भवेत् ॥६०॥**

त्यही नियमको पालना गर्नु पर्दछ जुन कुरा एकजना भएपनि ब्राह्मणले बताएको हुन्छ । ब्राह्मणको वचनको पालना गर्नू, नगरे उ ब्रह्मघाती हुन्छ ।

**उपवासो व्रतञ्चैव स्नानं तीर्थं जपस्तपः ।**
**विप्रैः सम्पादितं यस्य सम्पन्नं तस्य तद्भवेत् ॥६१॥**

जुन मानिसका उपवास, व्रत, स्नान, तीर्थ, जप र तप ब्राह्मणबाट सम्पन्न गराइएको छ त्यो नै वास्तवमै सम्पन्न भएको मानिन्छ ।

**व्रतच्छिद्रं तपश्छिद्रं यच्छिद्रं यज्ञकर्मणि ।**
**सर्वं भवति निश्छिद्रं ब्राह्मणैरुपपादितम् ॥६२॥**

व्रत, तप र यज्ञकर्मका समयमा हुने दोषहरु ब्राह्मणबाट
कार्य सम्पादन गर्दा दोषरहित हुन्छन् ।

**ब्राह्मणा जङ्गमं तीर्थं निर्जलं सर्वकामदम् ।**
**तेषां वाक्योदकेनैव शुध्यन्ति मलिना जनाः ॥६३॥**

ब्राह्मण सबै इच्छा पूर्ण गराउने जलबिनाका गतिमान् तीर्थ हुन् ।
दोषी जन उनका वचनरुपी जलले नै शुद्ध हुन्छन् ।

**ब्राह्मणा यानि भाषन्ते मन्यन्ते तानि देवताः ।**
**सर्वदेवमया विप्रा न तद्वचनमन्यथा ॥६४॥**

ब्राह्मण जे बोल्दछन् देवता यसलाई स्वीकार गर्दछन् ।
उनी सबै देवताका स्वरुप हुन् । उनको वचन व्यर्थ जाँदैन ।

**अन्नाद्ये कीटसंयुक्ते मक्षिकाकेशदूषिते ।**
**अन्तरा संस्पृशेच्चापस्तदन्नं भस्मना स्पृशेत् ॥६५॥**

भोजनमा कीरा आदि परे वा रौँ, झिँगा आदिले दूषित भए
बीचमै कुल्ला गर्नू र त्यो अन्नमा खरानी हाल्नू ।

**भुञ्जानो हि यदा विप्रः पादं हस्तेन संस्पृशेत् ।**
**उच्छिष्टं हि स वै भुङ्क्ते भुङ्क्ते यो भुक्तभाजने ॥६६॥**

खाना खाँदा ब्राह्मणले हातले गोडा छोएमा वा जुठो भाँडामा
खाएमा उसले निश्चित रुपमा जुठो नै खाएको ठहर्दछ ।

**पादुकास्थो न भुञ्जीत पर्य्यङ्केसंस्थितोऽपिवा ।**
**शुना चाण्डालदृष्टो वा भोजनं परिवर्जयेत् ॥६७॥**

जुता लगाएर नखानू, पलङमा बसेर पनि नखानू, खाइरहेको बेलामा
कुकुर वा चाण्डालले देखे खान छोड्नू ।

**पक्वान्नञ्च निषिद्धं यदन्नशुद्धिस्तथैव च ।**
**यथा पराशरेणोक्तं तथैवाहं वदामि वः ॥६८॥**

पकाइएको अन्नको बारनाका सम्बन्धमा तथा अन्नको शुद्धिका सम्बन्धमा पराशरले भने बमोजिमका कुरा नै म तिमिलाई बताउँदछु ।

**श्रृतं द्रोणाढकस्यान्नं काकश्वानोपघातितम् ।**
**केनैतच्छुध्यते चान्नं ब्राह्मणेभ्यो निवेदयेत् ॥६९॥**

एक द्रोण वा एक आढक पकाएको अन्न यदि काग वा कुकुरबाट अपवित्र बनाइएको छ भने के गर्दा शुद्ध हुन्छ भन्ने कुरा ब्राह्मणहरूलाई सोध्नू ।

**काकश्वानावलीढन्तु द्रोणान्नं न परित्यजेत् ।**
**वेदवेदाङ्गविद्विप्रैर्धर्मशास्त्रानुपालकैः ॥७०॥**

काग र कुकुरले जुठो हालेको द्रोणभरी अन्न नफ्याँक्नू भनी धर्मशास्त्र आदेश पालक र वेद-वेदाङ्गज्ञ ब्राह्मणले अरुलाई बताउनू ।

**प्रस्था द्वात्रिंशतिर्द्रोणः स्मृतो द्विप्रस्थ आढकः ।**
**ततो द्रोणाढकस्यान्नं श्रुतिस्मृतिविदो विदुः ॥७१॥**

बत्तीस प्रस्थको एक द्रोण र दुई प्रस्थको एक आढक मानिन्छ । श्रुतिस्मृतिविज्ञ द्रोण र आढक अन्नको तौल वा नाप यति नै बताउँदछन् ।

**काकश्वानावलीढं तु गवाघ्रातं खरेण वा ।**
**स्वल्पमन्नं त्यजेद्विप्रः शुद्धिर्द्रोणाढके भवेत् ॥७२॥**

ब्राह्मणले काग वा कुकुरको जुठो र गाईगधाले मुख हालेको अन्नबाट थोरै अन्न फ्याँक्नू । यसरी द्रोण र आढक भरीको अन्न शुद्ध हुन्छ ।

**अन्यस्योद्धृत तन्मात्रं यच्च नोपहतं भवेत् ।**
**सुवर्णोदकमभ्युक्ष्य हुताशेनैव तापयेत् ॥७३॥**

जति मुख आदिले छोइएको हो त्यति अन्न निकाली नछोएको

अन्नमा सुनपानी छर्केर आगोमा तताउनू ।

**हुताशनेन संस्पृष्टं सुवर्णसलिलेन च ।**
**विप्राणां ब्रह्मघोषेण भोज्यं भवति तत्क्षणात् ॥७४॥**

अग्नि र सुनपानीको सम्पर्कले तथा ब्राह्मणको मन्त्रले त्यो अन्न तुरुन्त खान योग्य हुन्छ ।

**अल्पं परित्यजेत् तत्र स्नेहस्योत्पवनेन च ।**
**अनलज्वालया शुद्धिर्गोरसस्य विधीयते ॥७५॥**

तेल, घिउ आदि चिल्ला वस्तुको शुद्धि अलिकति फालेर छान्नाले हुन्छ ।
दूधको शुद्धि आगोको ज्वालामा तताएर हुने बताइन्छ ।

॥ इति श्रीपाराशरे धर्मशास्त्रे षष्ठोऽध्यायः ॥६॥
मोहनप्रसाद सापकोटाबाट श्रीपराशरस्मृतिको छैटौं अध्याय
नेपालीमा भावानुवाद गरेर सकियो ।

आदितः श्लोकानां समष्ट्यङ्काः-१९८+७५=२७३
शुरुदेखिको श्लोकसंख्याः-१९८+७५=२७३

## ॥ अथ सप्तमोऽध्यायः ॥
## (सातौं अध्याय)
## ॥ द्रव्यशुद्धिवर्णनम् ॥

**अथातो द्रव्यशुद्धिः पराशरवचो यथा ।**
**दारवाणान्तु पात्राणां तत्क्षणाच्छुद्धिरिष्यते ॥१॥**

अब पराशरको मतमा द्रव्यशुद्धिका विषयमा बताइन्छ । काठका भाँडाको तत्कालै शुद्धि मानिन्छ ।

**मार्जनाद्यज्ञपात्राणां पाणिना यज्ञकर्मणि ।**
**चमसानां ग्रहाणाञ्च शुद्धिः प्रक्षालनेन तु ॥२॥**

यज्ञकर्ममा प्रयोग गरिने यज्ञपात्रहरुको शुद्धि हातले तथा चमस (सोम-पात्र)

र चिम्टा आदिको शुद्धि पानीले धुनाले हुन्छ ।

**चरुणां स्रुक्स्रुवाणाञ्च शुद्धिरुष्णेन वारिणा ।**
**भस्मना शुध्यते कांस्यं ताम्रमम्लेन शुध्यति ॥३॥**

चरु, स्रुक र स्रुवको शुद्धि तातो पानीले हुन्छ । काँसका भाँडा खरानीले तथा तामाका भाँडा अमिलोले शुद्ध हुन्छ ।

**रजसा शुध्यते नारी विकलं या न गच्छति ।**
**नदी वेगेन शुध्येत लेपो यदि न दृश्यते ॥४॥**

अस्वस्थ छैन भने, नारी परसर्नाले शुद्ध हुन्छे । फोहोर देखिँदैन भने नदी बहनाले शुद्ध हुन्छ ।

**वापीकूपतडागेषु दूषितेषु कथञ्चन ।**
**उद्धृत्य वै घटशतं पञ्चगव्येन शुध्यति ॥५॥**

कुवा, पँधेरो, पोखरी केही गरी दुषित भए त्यसबाट सय गाग्रा
पानी निकाली पञ्चगव्य हाल्नाले शुद्ध हुन्छ ।

**अष्टवर्षा भवेद् गौरी नववर्षा तु रोहिणी ।**
**दशवर्षा भवेत् कन्या अत ऊर्द्ध्वं रजस्वला ॥६॥**

आठ वर्षकी गौरी, नौ वर्षकी रोहिणी, दश वर्षकी कन्या र त्यसभन्दा माथिकी रजस्वला हुन्छे ।

**प्राप्ते तु द्वादशे वर्षे यः कन्यां न प्रयच्छति ।**
**मासि मासि रजस्तस्याः पिबन्ति पितरः स्वयम् ॥७॥**

बाह्र वर्षकी हुँदा पनि कन्याको जसले विवाह गर्दिँदैन त्यसका पितृ स्वयं
प्रत्येक महिनाको त्यस कन्याको रज पिउँदछन् ।

**माता चैव पिता ज्येष्ठो भ्राता तथैव च ।**
**त्रयस्ते नरकं यान्ति दृष्ट्वा कन्यां रजस्वलाम् ॥८॥**

माता, पिता र जेठो दाजु समेत तीनै जना रजस्वला कन्यालाई देखेर नरकमा जान्छन् ।

**यस्तां समुद्वहेत् कन्यां ब्राह्मणोऽज्ञानमोहितः ।**
**असम्भाष्यो ह्यपाङ्क्तेयः स विप्रो वृषलीपतिः ॥९॥**

अज्ञानताले असमञ्जसमा परेको जो ब्राह्मण ती कन्यालाई विवाह गर्दछ, शूद्राको पति मानिने उ न बोल्न योग्य हुन्छ न त ब्राह्मणका पङ्क्तिमा भोजन गर्न योग्य हुन्छ ।

**यः करोत्येकरात्रेण वृषलीसेवनं द्विजः ।**
**स भैक्षभुग्जपन्नित्यं त्रिभिर्वर्षैर्विशुध्यति ॥१०॥**

जो ब्राह्मण एकरात शूद्राको भोग गर्दछ उसले नित्य भिक्षाको भोग गर्दै तथा जप गर्दै तीन वर्षमा राम्ररी शुद्ध हुन्छ ।

**अस्तं गते यदा सूर्य्ये चाण्डालं पतितं स्त्रियम् ।**
**सूतिकां स्पृशते चैव कथं शुद्धिर्विधीयते ॥११॥**

जो ब्राह्मणले सूर्यास्तपछि चाण्डाल, पतित र सुत्केरीलाई छुन्छ त्यसको शुद्धि के गरी हुन्छ ? ।

**जातवेदं सुवर्णञ्च सोममार्गं विलोक्य च ।**
**ब्राह्मणानुगतश्चैव स्नानं कृत्वा विशुध्यति ॥१२॥**

अग्नि, सुन वा चन्द्र-पथ दर्शन गर्नाले, ब्राह्मणको पछिपछि हिँड्नाले र नुहाउनाले राम्ररी शुद्ध हुन्छ ।

**स्पृष्ट्वा रजस्वलाऽन्योन्यं ब्राह्मणी ब्राह्मणी तथा ।**
**यावत्तिष्ठेन्निराहारा त्रिरात्रेणैव शुध्यति ॥१३॥**

परसरेका ब्राह्मणीहरुका बीचमा स्पर्श हुन गए दुवैले तीन रातसम्म निराहार रहनाले तीन रातमा शुद्ध हुन्छन् ।

**स्पृष्ट्वा रजस्वलाऽन्योन्यं ब्राह्मणी क्षत्रिया तथा ।**
**अर्द्धकृच्छ्रं चरेत् पूर्वा पादमेकमनन्तरा ॥१४॥**

परसरेकी ब्राह्मणी र परसरेकी क्षत्रिणीका बीचमा स्पर्श हुन गए ब्राह्मणीले
अर्द्धकृच्छ्र र क्षत्रिणीले चौथाई कृच्छ्रव्रत गर्नू ।

**स्पृष्ट्वा रजस्वलाऽन्योन्यं ब्राह्मणी वैश्यजा तथा ।**
**पादोनं चैव पूर्वायाः परायाः कृच्छ्रपादकम् ॥१५॥**

परसरेकी ब्राह्मणी र परसरेकी वैश्याका बिचमा स्पर्श हुन गए ब्राह्मणीले
तीन-चौथाई कृच्छ्र र वैश्याले चौथाई कृच्छ्रव्रत गर्नू ।

**स्पृष्ट्वा रजस्वलाऽन्योन्यं ब्राह्मणी शूद्रजा तथा ।**
**कृच्छ्रेण शुध्यते पूर्वा शूद्रा दानेन शुध्यति ॥१६॥**

परसरेकी ब्राह्मणी र परसरेकी शूद्राका बिचमा स्पर्श हुन गए ब्राह्मणी एक
कृच्छ्रव्रतले र शूद्रा दानले शुद्ध हुन्छे ।

**स्नाता रजस्वला या तु चतुर्थेऽहनि शुध्यति ।**
**कुर्य्याद्रजोनिवृत्तौ तु दैवपित्र्यादिकर्म च ॥१७॥**

परसरेकी स्त्री चौथो दिन नुहाएर शुद्ध हुन्छे । परसरेकीले रजनिवृत्त
भएपछि त देव तथा पितृकर्म गरुन् ।

**रोगेण यद्रजः स्त्रीणामन्वहन्तु प्रवर्तते ।**
**नाशुचिः सा ततस्तेन तत् स्याद्वैकारिकं मतम् ॥१८॥**

रोगले गर्दा दिनहुँ रज बगिरहने स्त्री सोका कारण अपवित्र हुन्न किनकि
त्यस्तो रज विकारले गर्दा उत्पन्न भएको मानिएको छ ।

**साध्वाचारा न तावत् स्याद् रजो यावत् प्रवर्तते ।**
**रजोनिवृत्तौ गम्या स्त्री गृहकर्मणि चैव हि ॥१९॥**

रजस्वला रज बगिरहेसम्म पवित्र हुन्न । रज आउन छोडेपछि नै
स्त्री सम्भोग र गृहकार्यका लागि योग्य हुन्छे ।

**प्रथमेऽहनि चाण्डाली द्वितीये ब्रह्मघातिनी ।**

**तृतीये रजकी प्रोक्ता चतुर्थेऽहनि शुध्यति ॥२०॥**

रजस्वला स्त्री पहिलो दिन चाण्डाल्नी, दोश्रो दिन ब्रह्मघातिनी र
तेश्रो दिन धोबिनी समान हुन्छे, चौथो दिन शुद्ध हुन्छे ।

**आतुरे स्नानमुत्पन्ने दशकृत्वो ह्यनातुरः ।**
**स्नात्वा स्नात्वा स्पृशेदेनं ततः शुध्येत् स आतुरः ॥२१॥**

रोगीलाई पवित्र हुन नुहाउने विधान छ । निरोगी कसैले रोगीका लागि दश
पटक नुहाई उसलाई छुनू, अनि रोगी शुद्ध हुन्छ ।

**उच्छिष्टोच्छिष्टसंस्पृष्टः शुना शूद्रेण वा द्विजः ।**
**उपोष्य रजनीमेकां पञ्चगव्येन शुध्यति ॥२२॥**

जुठो मुख हुँदा शूद्र र कुकुरले छोइएको द्विज एक रात उपवास बसी
पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**अनुच्छिष्टेन शूद्रेण स्नानं स्पर्शे विधीयते ।**
**उच्छिष्टेन च संस्पृष्टः प्राजापत्यं समाचरेत् ॥२३॥**

जुठो मुख नभएको शूद्रले छोए नुहाउनू भनिएको छ भने
जुठो मुख भएकोले छोए प्राजापत्य व्रत गर्नू ।

**भस्मना शुध्यते कांस्यं सुरया यन्न लिप्यते ।**
**सुरामात्रेण संस्पृष्टः शुध्यतेऽग्न्युपलेपनैः ॥२४॥**

मदिरा नलागेको काँसको भाँडो खरानीले र मदिरा लागेको काँसको भाँडो आगोमा
तताउनाले वा गोबरले लिप्नाले शुद्ध हुन्छ ।

**गवाघ्रातानि कांस्यानि श्वकाकोपहतानि च ।**
**शुध्यन्ति दशभिः क्षारैः शूद्रोच्छिष्टानि यानि च ॥२५॥**

गाईले मुख लाएको वा कुकुर-कौवाद्वारा अपवित्र तथा शूद्रले जुठो हालेका काँसका भाँडा
दश पटक क्षार(नुनपानी)ले सफा गर्नू, शुद्ध हुन्छ ।

**गण्डूषं पादशौचञ्च कृत्वा वै कांस्यभाजने ।**
**षण्मासाद् भुवि निक्षिप्य उद्धृत्य पुनराहरेत् ॥२६॥**

काँसका भाँडामा कुल्ला गरे वा गोडा धोए छ महिनासम्म जमिनमा गाड्नू र
फेरी निकाली प्रयोग गर्नू ।

**आयसेष्वपसारेण सीसस्याग्नौ विशोधनम् ।**
**दन्तमस्थि तथा श्रृङ्गं रौप्यं सौवर्णभाजनम् ॥२७॥**

फलामका भाँडा परित्यागले र सीसाका भाँडाको शुद्धि अग्निले हुन्छ ।
दाँत-हाड-सिङ, चाँदी र सुनका भाँडा, एवं ...।

**मणिपाषाणशङ्खांश्च एतान् प्रक्षालयेज्जलैः ।**
**पाषाणे तु पुनर्घृष्टिरेषा शुद्धिरुदाहृता ॥२८॥**

मणि, पत्थर र शङ्खलाई पानीले धुनू । पत्थरले बनेका भाँडालाई फेरी घोट्नू भनी शुद्धी
बताइएको छ ।

**मृद्भाण्डदहनाच्छुद्धिः धान्यानां मार्जनादपि ॥२९॥**

माटाको भाँडो पोल्नाले र धानादि अन्न सफा गर्नाले शुद्ध हुन्छ ।

**अद्भिस्तु प्रोक्षणं शौचं बहूनां धान्य वाससाम् ।**
**प्रक्षालनेन त्वल्पानामद्भि : शौचं विधीयते ॥३०॥**

कपडा र धान आदि अनाज धेरै भए जल छर्केर शुद्ध हुन्छ, थोरै भए पखाल्नु पर्दछ ।

**वेणुवल्कलचीराणां क्षौमकार्पासवाससाम् ।**
**और्णानां नेत्रपट्टानां जलाच्छौचं विधीयते ॥३१॥**

बाँस र बोक्राले बनेका कपडा, आलसका कपडा, ऊनी कपडा र बैल
आदिको आँखामा बाँध्ने पट्टि पानीले धुनाले शुद्ध हुन्छ ।

**तूलिकाद्युपधानानि पीतरक्ताम्बराणि च ।**
**शोषयित्वार्कतापेन प्रोक्षयित्वा शुचिर्भवेत् ॥३२॥**

कपासले बनेका तकिया र पहेँला वा राता कपडालाई घाममा सुकाएर
जल छर्कनाले शुद्ध हुन्छन् ।

**मुञ्जोपस्करसूर्पाणां शाणस्य फल चर्मणाम् ।**
**तृणकाष्ठादिरज्जूनामुदकप्रोक्षणं मतम् ॥३३॥**

मुजका सामान, नाङ्लो, सनपाटका वस्तु, फलफूल, छालाका वस्तु, घाँस,
दाउरा र डोरी शुद्ध पार्न पानी छर्कनु भनिएको छ ।

**मार्जारमक्षिकाकीटपतङ्गकृमिदर्दुराः ।**
**मेध्यामेध्यं स्पृशन्त्येव नोच्छिष्टान् मनुरब्रवीत् ॥३४॥**

बिरालो, झिँगा, कीरा, पुतली, फट्याङ्ग्रा र भ्यागुतोले पवित्र वा अपवित्र वस्तु
छोए त्यो अपवित्र भएको मानिँदैन भनी मनुले भनेका छन् ।

**भूमिं स्पृष्ट्वा गतं तोयं यश्चाप्यन्योन्यविप्रुषः ।**
**भुक्त्वोच्छिष्टं तथा स्नेहं नोच्छिष्टं मनुरब्रवीत् ॥३५॥**

जमिनमा परी बगेको पानी, कुराकानी गर्दा खस्ने थुकका छिटा र खाना खाइसकी बचेको
घिउ-तेल जुठो हुँदैन भनी मनुले भनेका छन् ।

**ताम्बूलेक्षुफले चैव भुक्तस्नेहानुलेपने ।**
**मधुपर्के च सोमे नोच्छिष्टं मनुरब्रवीत् ॥३६॥**

प्रयोग पछि बाँकी बचेको पान, ऊखु, फलफूल, तेल आदि चिल्ला पदार्थ, शरीरमा
दल्ने सुगन्धित वस्तु, मधुपर्क र सोम यि कुरा जुठो मानिँदैन भनी मनुले भनेका छन् ।

**रथ्याकर्दमतोयानि नावः पन्थास्तृणानि च ।**
**मरुतार्केण शुध्यन्ति पक्वेष्टकचितानि च ॥३७॥**

रथ हिँड्ने बाटो, हिलो, जल, डुंगा, बाटो, घाँसपात र पक्की ईंटले बनेका मन्दिर,
भवनादि हावा र सूर्यकिरणले शुद्ध हुन्छन् ।

**अदुष्टा सन्तता धारा वातोद्धूताश्च रेणवः ।**
**स्त्रियो वृद्धाश्च बालाश्च न दुष्यन्ति कदाचन ॥३८॥**

बिनादोष अनवरत बगिरहने जलको धारा, हावाले उडाएको धूलो, स्त्रि, वृद्ध र बालक कहिल्यै दूषित हुन्न ।

**क्षुते निष्ठीवने चैव दन्तोच्छिष्टे तथानृते ।**
**पतितानाञ्च सम्भाषे दक्षिणं श्रवणं स्पृशेत् ॥३९॥**

हाच्छिउँ आए, थुके, दाँतमा जुठो अड्किए, भूटो बोले तथा पतितसँग कुराकानी गरे दाहिने कान छुनू ।

**अग्निरापश्च वेदाश्च सोमसूर्य्यानिलास्तथा ।**
**एते सर्व्वेऽपि विप्राणां श्रोत्रे तिष्ठन्ति दक्षिणे ॥४०॥**

अग्नि, जल, वेद, चन्द्रमा, सूर्य तथा वायु यी सबै कुरा ब्राह्मणका दाहिने कानमा निवास गर्दछन् ।

**प्रभासादीनि तीर्थानि गङ्गाद्याः सरितस्तथा ।**
**विप्रस्य दक्षिणे कर्णे सान्निध्यं मनुरब्रवीत् ॥४१॥**

प्रभास आदि तिर्थ र गङ्गा आदि नदीहरु ब्राह्मणका दाहिने कानमा उपस्थित भएका हुन्छन् भनी मनुले भनेका छन् ।

**देशभङ्गे प्रवासे च व्याधिषु व्यसनेष्वपि ।**
**रक्षेदेव स्वदेहादि पश्चाद्धर्मं समाचरेत् ॥४२॥**

देश लथालिङ्ग हुँदा, विदेशमा हुँदा, रोगमा र विपत्तिमा पहिले आफ्नो शरीर आदिको रक्षा गर्नु अनि मात्र धर्मको पालना गर्नू ।

**येन केन च धर्मेण मृदुना दारुणेन च ।**
**उद्धरेद्दीनमात्मानं समर्थो धर्ममाचरेत् ॥४३॥**

नरम वा कडा जुनसुकै धर्म गर्नाले दयनीय भइए पहिले आफूलाई माथि उठाउनू र समर्थ भएपछि धर्मको आचरण गर्नू ।

**आपत्काले तु सम्प्राप्ते शौचाचारं न चिन्तयेत् ।**
**स्वयं समुत्तरेत् पश्चात् स्वस्थो धर्म्मं समाचरेत् ॥४४॥**

आपत आउँदा शौच तथा आचारको चिन्ता नगर्नू । पहिले आफ्नो उद्धार गर्नू त्यसपछि मात्र स्वस्थ भई धर्मको आचरण गर्नू ।

॥ इति श्रीपाराशरे धर्मशास्त्रे सप्तमोऽध्यायः ॥७॥
मोहनप्रसाद सापकोटाबाट श्रीपराशरस्मृतिको सातौँ अध्याय
नेपालीमा भावानुवाद गरेर सकियो ।



आदितः श्लोकानां समष्टयङ्काः-२७३+४४=३१७
शुरुदेखिको श्लोकसंख्या-२७३+४४=३१७



## ॥ अथाष्टमोऽध्यायः ॥
## (आठौँ अध्याय)
## ॥ धर्माचरणवर्णनम् ॥
## (धार्मिक आचरण)

**गवां बन्धनयोत्रक्त्रे तु भवेन्मृत्युरकामतः ।**
**अकामात् कृतपापस्य प्रायश्चित्तं कथं भवेत् ॥१॥**

गाई बाँध्दा, नाथ्री छेड्दा अनायासै मरे, नचाहँदा हुन जाने यस्तो पापको प्रायश्चित कसरी हुन्छ (त्यो म बताउँदछु) ।

**वेदवेदाङ्गविदुषां धर्मशास्त्रं विजानताम् ।**
**स्वकर्मरतविप्राणां स्वकं पापं निवेदयेत् ॥२॥**

वेदवेदाङ्गका विद्वान्, धर्मशास्त्र जान्ने र स्वकर्ममा लागेका ब्राह्मणलाई गएर आफूले गरेको पाप बताउनू ।

**अत ऊर्ध्वं प्रवक्ष्यामि उपस्थानस्य लक्षणम् ।**

**उपस्थितो हि न्यायेन व्रतादेशनमर्हति ॥३॥**

यसपछि म पाप बताउन उपस्थित हुने विधि बताउँदछु । रीतिपूर्वक उपस्थित
भएका मानिस मात्र उपदेशका लागि योग्य हुन्छन् ।

**सद्यो निःशंसये पापे न भुञ्जीतानुपस्थितः ।**
**भुञ्जानो वर्द्धयेत् पापं पर्षद्यत्र न विद्यते ॥४॥**

पापको निश्चय हुन गएपछि जहाँ विद्वत्परिषद् छ त्यहाँ उपस्थित नभई केही नखानु, खाए
पापलाई अझ बढाउँदछ ।

**शंसये तु न भोक्तव्यंयावत् कार्यविनिश्चयः ।**
**प्रमादश्च न कर्त्तव्यो यथैवाशंसयस्तथा ॥५॥**

शङ्का भए गरेको कार्यको शङ्का नमेटिँदासम्म भोजन नगर्नू ।
यस सम्बन्धमा नपेल्नू । जे गर्नाले शङ्का मेटिन्छ त्यही गर्नू ।

**कृत्वा पापं न गूहेत गुह्यमानं विवर्द्धते ।**
**स्वल्पं वाथ प्रभूतं वा धर्मविद्भ्यो निवेदयेत् ॥६॥**

पाप गरेर त्यसलाई नलुकाउनु लुकाउनाले पाप बढ्दछ । पाप थोरै वा धेरै जे भए
पनि त्यसलाई धर्मविदका समक्ष बताउनू ।

**ते हि पापे कृते वेद्या हन्तारश्चैव पाप्मनाम् ।**
**व्याधितस्य यथा वैद्या बुद्धिमन्तो रुजापहाः ॥७॥**

जसरी जान्ने वैद्य रोगीको रोग नाशक हुन्छन् त्यसरी नै धर्मविद व्यक्ति
नै पाप गर्दा पापलाई विनाश गर्ने व्यक्ति हुन भनी जान ।

**प्रायश्चित्ते समुत्पन्ने ह्रीमान् सत्यपरायणः ।**
**मुहुरार्जवसम्पन्नः शुद्धिं गच्छेत मानवः ॥८॥**

प्रायश्चित गर्नुपर्ने भएमा लजालु, सत्यको आश्रय लिने र
सरल मानिस प्रायश्चित गरी फेरी पवित्र हुन्छ ।

**सचैलं वाग्यतः स्नात्वा क्लिन्नवासाः समाहितः ।**
**क्षत्त्रियो वाथ वैश्यो वा ततः पर्षदमाव्रजेत् ॥९॥**

चुपचाप सवस्त्र नुहाएर चिसै लुगाले होसियार भई क्षत्रिय अथवा वैश्य धर्म-परिषदमा आउनू ।

**उपस्थाय ततः शीघ्रमार्त्तिमान् धरणीं व्रजेत् ।**
**गात्रैश्च शिरसा चैव न च किञ्चिदुदाहरेत् ॥१०॥**

त्यसपछि चाँडै आफूले गरेको पाप बताएर दुःखी हुँदै साष्टाङ्ग दण्डवत् गर्नू र अनि केही नबोल्नू ।

**सावित्र्याश्चापि गायत्र्याः सन्ध्योपास्त्यग्निकार्ययोः ।**
**अज्ञानात् कृषिकर्त्तारो ब्राह्मणा नामधारकाः ॥११॥**

सविता देवता भएको गायत्री मन्त्र, सन्ध्योपासना र यज्ञकर्म नजानेर खेतीपाती गर्ने भएका ब्राह्मणहरु नाममात्रका ब्राह्मण हुन् ।

**अव्रतानाममन्त्राणां जातिमात्रोपजीविनाम् ।**
**सहस्रशः समेतानां परिषत्त्वं न विद्यते ॥१२॥**

व्रत पालना नगर्ने, मन्त्रहीन तथा जन्मले मात्र ब्राह्मणको कर्म गर्ने भएका हजारौं जम्मा भएपनि त्यो धर्म परिषद् हुँदैन ।

**यद्वदन्ति तमोमूढा मूर्खा धर्ममतद्विदः ।**
**तत्पापं शतधा भूत्वा तद्वक्तॄनधि गच्छति ॥१३॥**

अज्ञानताले मूर्ख भएका र धर्म नजान्नेले जब धर्मको उपदेश गर्दछन् तब पाप पनि सय गुना भई तिनैलाई नै लाग्दछ ।

**अज्ञात्त्वा धर्मशास्त्राणि प्रायश्चित्तं ददाति यः ।**
**प्रायश्चित्ती भवेत् पूतः किल्विषं पर्षदि व्रजेत् ॥१४॥**

शास्त्र नजानी जसले प्रायश्चित्तको आदेश दिन्छ यसबाट गर्ने त पवित्र

हुन्छ तर पाप चाहीँ परिषद्लाई लाग्दछ ।

**चत्वारो वा त्रयो वापि यं ब्रूयुर्वेदपारगाः ।**
**स धर्म इति विज्ञेयो नेतरैस्तु सहस्रशः ॥१५॥**

चार वा तीन वेद-पारङ्गत विद्वान जे उपदेश दिन्छन् त्यसलाई नै धर्म जान्नू ।
अरु हजारौँले बताए पनि त्यो धर्म हुन सक्दैन ।

**प्रमाणमार्गं मार्गन्तो ये धर्मं प्रवदन्ति वै ।**
**तेषामुद्विजते पापं सम्भूतगुणवादिनाम् ॥१६॥**

प्रमाणमार्गको अन्वेषक जो विद्वान धर्मको उपदेश गर्दछन्, समस्त
गुणको प्रवचन गर्ने ती विद्वानसँग पाप डराउँदछ ।

**यथाश्मनि स्थितं तोयं मारुतार्केण शुध्यति ।**
**एवं परिषादादेशान्नाशयेदेव दुष्कृतम् ॥१७॥**

जसरी पत्थरमा रहेको जल, वायु र सूर्यले शुद्ध हुन्छ त्यसरी
धर्म-परिषद्को आदेशले दुष्कर्म नष्ट हुन्छ ।

**नैव गच्छति कर्त्तारं नैव गच्छति पर्षदम् ।**
**मारुतार्कादिसंयोगात् पापं नश्यति तोयवत् ॥१८॥**

पाप न त गर्नेलाई लाग्छ न धर्म-परिषदलाई त्यो त त्यसरी नष्ट हुन्छ
जसरी हावा र सूर्यको संयोगले जल नष्ट हुन्छ ।

**चत्वारो वा त्रयो वापि वेदवन्तोग्निऽहोत्रिणः ।**
**ब्राह्मणानां समर्था ये परिषत् सा विधीयते ॥१९॥**

चार वा तीन जना वेदका विद्वान, अग्निहोत्री र ब्राह्मणहरुमा समर्थहरुको
जुन परिषद हुन्छ त्यसैलाई नै धर्म-परिषद भनिन्छ ।

**अनाहिताग्नयो येब्रह्मन्ये वेदवेदाङ्गपारगाः ।**
**पञ्च त्रयो वा धर्म्मज्ञाः परिषत् सा प्रकीर्त्तिता ॥२०॥**

अग्निको आधान नगर्ने तर वेद र वेदाङ्गमा पोख्त तथा धर्म जान्ने जो अन्य तीन वा पाँच व्यक्ति हुन्छन्, तिनलाई पनि परिषद भनिन्छ ।

**मुनीनामात्मविद्यानां द्विजानां यज्ञयाजिनाम् ।**
**वेदव्रतेषु स्नातानामेकोऽपि परिषद्भवेत् ॥२१॥**

आत्मविद्या जान्ने मुनिजन, यज्ञबाट हवन गराउने ब्राह्मण वा वेद-व्रत गर्ने स्नातकमध्ये एउटा मात्र भएपनि त्यो परिषद् हुन्छ ।

**पञ्च पूर्वं मया प्रोक्तास्तेषाञ्चैव त्वसम्भवे ।**
**स्ववृत्तिपरितुष्टा ये परिषत् सा प्रकीर्त्तिता ॥२२॥**

मैलै पहिले बताएका पाँच थरी ब्राह्मण नहुँदा जो आफ्नो पेसागत दिनचर्याबाट सन्तुष्ट ब्राह्मण हुन्छ त्यसलाई पनि परिषद् नै भनिन्छ ।

**अत ऊर्ध्वन्तु ये विप्राः केवलं नामधारकाः ।**
**परिषत्त्वं न तेषां वै सहस्रगुणितेष्वपि ॥२३॥**

यस बाहेकका केवल नाममात्रका जेजति ब्राह्मण हुन्छन् तिनको परिषद् हुँदैन चाहे ती हजार गुना नै किन नहुन् ।

**यथा काष्ठमयो हस्ती यथा चर्ममयो मृगः ।**
**ब्राह्मणस्त्वनधीयानास्त्रयस्ते नामधारकाः ॥२४॥**

काठले बनेको हात्ती, छालाले बनेको मृग जस्तै नै नपढेको ब्राह्मण पनि हुन्छ र यी तीनै थरी नाममात्रका हुन्छन् ।

**ग्रामस्थानं यथा शून्यं यथा कूपस्तु निर्जलः ।**
**यथा हुतमनग्नौ च अमन्त्रो ब्राह्मणस्तथा ॥२५॥**

जस्तो सुनसान गाऊँ हुन्छ, जस्तो जल बिनाको कुवा हुन्छ, जस्तो अग्नि बिनाको होम हुन्छ त्यस्तै मन्त्रले हीन ब्राह्मण हुन्छ ।

**यथा षण्डोऽफलः स्त्रीषु यथा गौरुषराफला ।**

**यथा चाज्ञेऽफलं दानं तथा विप्रोऽनृचोऽफलः ॥२६॥**

जसरी स्त्रीका लागि नपुंसक निष्फल हुन्छ, जसरी थारो गाई निष्फल हुन्छ, जसरी मूर्खलाई दिएको दान निष्फल हुन्छ त्यसरी नै मन्त्र नजान्ने ब्राह्मण निष्फल हुन्छ ।

**चित्रं कर्म यथानेकैरङ्गैरुन्मील्यते शनैः ।**
**ब्राह्मण्यमपि तद्वत् स्यात् संस्कारैर्विधिपूर्वकम् ॥२७॥**

जसरी चित्र बिस्तारै बिस्तारै विभिन्न अङ्ग बनाउँदै पूर्णहुन्छ त्यसरी ब्राह्मणत्व पनि पटकपटक विधिले गरिने संस्कारले पूर्ण हुन्छ ।

**प्रायश्चित्तं प्रयच्छन्ति ये द्विजा नामधारकाः ।**
**ते द्विजाः पापकर्माणः समेता नरकं ययुः ॥२८॥**

नाममात्रका जो ब्राह्मण प्रायश्चित गराउँदछन् त्यस्तो पाप गर्ने सबै ब्राह्मणहरु नरकमा पर्दछन् ।

**ये पठन्ति द्विजा वेदं पञ्चयज्ञरताश्च ये ।**
**त्रैलोक्यं धारयन्त्येते पञ्चेन्द्रियरताश्रयाः ॥२९॥**

जो ब्राह्मण वेद पढ्दछन् अथवा जो पञ्च-महायज्ञ गरिरहन्छन् ती पञ्च इन्द्रिय भएका हुँदाहुँदै पनि तीनै लोकलाई धारण गर्दछन् ।

**सम्प्रणीतः श्मशानेषु दीप्तोऽग्निः सर्वभक्षकः ।**
**तथैव ज्ञानवान् विप्रः सर्वभक्षश्च दैवतम् ॥३०॥**

जसरी मसानमा लगिएको र बलेको अग्नि सबैलाई डढाउने बन्दछ त्यसरी नै वेदज्ञानी ब्राह्मण सबै पापलाई डढाउने देवता समान हुन्छन् ।

**अमेध्यानि च सर्वाणि प्रक्षिपन्त्युदके यथा ।**
**तथैव किल्विषं सर्वं प्रक्षेप्तव्यं द्विजेऽमले ॥३१॥**

अपवित्र वस्तु सेलाउन त्यसलाई जलमा हाले जस्तै सबै पापकर्महरु जलाउन पवित्र ब्राह्मणरुपी अग्निमा हाल्नु पर्दछ ।

गायत्रीरहितो विप्रः शूद्रादप्यशुचिर्भवेत् ।
गायत्रीब्रह्मतत्त्वज्ञाः संपूज्यन्ते द्विजोत्तमाः ॥३२॥

गायत्रीले रहित ब्राह्मण शूद्र भन्दा पनि अपवित्र हुन्छन् भने गायत्री र ब्रह्मतत्व जान्ने ब्राह्मण पूजिन्छन् ।

दुःशीलोऽपि द्विजः पूज्यो न शूद्रो विजितेन्द्रियः ।
कः परीत्यज्य दुष्टाङ्गां दुहेच्छीलवतीं खरीम् ॥३३॥

दुष्ट स्वभावका हुँदा पनि ब्राह्मण नै पूजनीय हुन्छन् जितेन्द्रिय शूद्र पुजिँदैनन् । को मानिस दुष्टा गाईलाई छाडी असल गधी दोहोला र ! ।

धर्मशास्त्ररथारूढा वेदखड्गधरा द्विजाः ।
क्रीडार्थमपि यद् ब्रूयुः स धर्मः परमः स्मृतः ॥३४॥

धर्मशास्त्ररुपी रथमा चढी वेदरुपी खड्ग लिने ब्राह्मण ख्यालख्यालमै केही भनिदिन्छन् भने पनि त्यसलाई परम धर्म मानिएको छ ।

चातुर्वेद्यो विकल्पी च अङ्गविद्धर्मपालकः ।
प्रपश्चाश्रमिणो मुख्याः परिषत् स्युर्दशावराः ॥३५॥

चारैवेदका ज्ञाता, मीमांसा दर्शनका विद्वान, वेदाङ्ग जान्ने र धर्मकोपालना गर्नेहरुको परिषद हुन्छ । अथवा जहाँ मुख्यमुख्य कम्तिमा दश गृहस्थ हुन्छन् त्यसलाई पनि परिषद नै भनिन्छ ।

राज्ञाश्चानुमते चैव प्रायश्चित्तं द्विजो वदेत् ।
स्वयमेव न वक्तव्या प्रायश्चित्तस्य निष्कृतिः ॥३६॥

राजाज्ञा लिएर मात्र ब्राह्मणले प्रायश्चितको घोषणा गर्नू । प्रायश्चितको पालनाको ब्राह्मण आफैं एक्लैले घोषणा नगर्नू ।

ब्राह्मणांश्च व्यतिक्रम्य राजा यत् कर्त्तुमिच्छति ।
तत्पापं शतधा भूत्वा राजानमुपगच्छति ॥३७॥

ब्राह्मणलाई बाहेक गरी राजा केही गर्न चाहन्छन् भने त
त्यो पाप सय थरी भई राजालाई नै लाग्दछ ।

**प्रायश्चित्तं सदा दद्याद्देवतायतनाग्रतः ।**
**आत्मानं पावयेत् पश्चाज्जपन् वै वेदमातरम् ॥३८॥**

ब्राह्मणले सधैं देवताको मन्दिर अगिल्तिर प्रायश्चितको व्यवस्था गराउनू । त्यसपछि
गायत्री जप्दै आफूलाई पवित्र पार्नू ।

**सशिखं वपनं कृत्वा त्रिसन्ध्यमवगाहनम् ।**
**गवां गोष्ठे वसेद्रात्रौ दिवा ताः समनुव्रजेत् ॥३९॥**

टुपी समेत खौराएर तीनै सन्ध्यामा नदीमा नुहाउनू । रातमा गौशालामा बस्नू र
दिनभर गाईको पछिपछि हिँड्नू ।

**उष्णे वर्षति शीते वा मारुते वाति वा भृशम् ।**
**न कुर्वीतात्मनस्त्राणं गोरकृत्वा तु शक्तितः ॥४०॥**

गर्मीमा, वर्षामा, जाडोमा वा आँधीमा शक्ति अनुसार
गाईको रक्षा नगरी आफ्नो बचावट नगर्नू ।

**आत्मनो यदि वान्येषां गृहे क्षेत्रेऽथवा खले ।**
**भक्षयन्तीं न कथयेत् पिबन्तञ्चैव वत्सकम् ॥४१॥**

आफ्नै वा अरुको घरमा, खेतमा वा खलोमा-खाइरहेकी गाई तथा माऊको
दूध पिइरहेका बाच्छाबाच्छीका बारेमा अरुलाई नभन्नू ।

**पिबन्तीषु पिबेत्तोयं संविशन्तीषु संविशेत् ।**
**पतितां पङ्कमग्नां वा सर्वप्राणैः समुद्धरेत् ॥४२॥**

गाईले पिएछि मात्र पानी पिउनू, आराम गरेछि मात्र आराम गर्नू । लडेको र हिलोमा
फँसेको गाईलाई पूरै शक्तिले बाहिर निकाल्नू ।

**ब्राह्मणार्थे गवार्थे वा यस्तु प्राणान् परित्यजेत् ।**

**मुच्यते ब्रह्महत्याद्यैर्गोप्ता गोब्राह्मणस्य च ॥४३॥**

ब्राह्मण वा गाईका लागि जसले प्राण त्याग गर्दछ, ऊ ब्रह्महत्या आदि पापबाट मुक्त हुन्छ र गाई तथा ब्राह्मणको रक्षक हुन्छ ।

**गोवधस्यानुरुपेण प्राजापत्यं विनिर्द्दिशेत् ।**
**प्राजापत्यन्तु यत्कृच्छ्रं विभजेत्तच्चतुर्विधम् ॥४४॥**

गाईको हत्या अनुरुपको प्राजापत्य व्रतको उपदेश गर्नू र त्यसलाई चार तरिकाले भाग लगाउनू ।

**एकाहमेकभक्ताशी एकाहं नक्तभोजनः ।**
**आयाचिताश्येकमहरेकाहं मारुताशनः ॥४५॥**

एक दिन भातमात्र, एक दिन रातमा मात्र, एक दिन नमागीकन जे भेटिन्छ त्यही खाएर र एक दिन वायु मात्र पिएर गरिने पहिलो तरिकाको प्राजापत्य हो ।

**दिनद्वयं चैकभक्तो द्विदिनं नक्तभोजनः ।**
**दिनद्वयमयाची स्याद् द्विदिनं मारुताशनः ॥४६॥**

दुईदिन भातमात्र, दुईदिन रातमा मात्र, दुईदिन नमागीकन जे भेटिन्छ त्यही खाएर र दुईदिन वायु मात्र पिएर गरिने दोश्रो तरिकाको प्राजापत्य हो ।

**त्रिदिनत्तचैकभक्ताशी त्रिदिनं नक्तभोजनः ।**
**दिनत्रयमयाची स्यात्त्रिदिनं मारुताशनः ॥४७॥**

तीनदिन भातमात्र, तीनदिन रातमा मात्र, तीनदिन नमागीकन जे भेटिन्छ त्यही खाएर र तीनदिन वायु मात्र पिएर गरिने तेश्रो तरिकाको प्राजापत्य हो ।

**चतुरहन्त्वेकभक्ताशी चतुरहं नक्तभोजनः ।**
**चतुर्दिनमयाची स्याच्चतुरहं मारुताशनः ॥४८॥**

चार दिन भातमात्र, चार दिन रातमा मात्र, चार दिन नमागीकन जे भेटिन्छ त्यही खाएर र चार दिन वायु मात्र पिएर गरिने चौथो तरिकाको प्राजापत्य हो ।

**प्रायश्चित्ते ततश्चीर्णे कुर्य्याद् ब्राह्मणभोजनम् ।**
**विप्राय दक्षिणां दद्यात् पवित्राणि जपेद् द्विजः ॥४९॥**

प्रायश्चितपछि ब्राह्मण भोजन गराउनू, दक्षिणा दिनू र पवित्र मन्त्र जप्नू ।

**ब्राह्मणान् भोजयित्वा तु गोघ्नः शुद्धो न संशयः ॥५०॥**

ब्राह्मण भोजनले त गोहत्यारा पनि शुद्ध हुने कुरामा शङ्का छैन ।

॥ इति श्रीपाराशरे धर्मशास्त्रे अष्टमोऽध्यायः ॥८॥
मोहनप्रसाद सापकोटाबाट श्रीपराशरस्मृतिको आठौँ अध्याय
नेपालीमा भावानुवाद गरेर सकियो ।

आदितः श्लोकानां समष्टयङ्काः-३१७+५०=३६७
शुरुदेखिको श्लोकसंख्या-३१७+५०=३६७

## ॥ अथ नवमोऽध्यायः ॥
## (नवौं अध्याय)
## ॥ गोसेवोपदेशवर्णनम् ॥
## (गाईको सेवा)

**गवां संरक्षणार्थाय न दुष्येद्रोधबन्धयोः ।**
**तद्वधन्तु न तं विद्यात् कामात् कामकृतन्तथा ॥१॥**

रक्षार्थ गाईलाई रोक्दा र बाँध्दा दोष लाग्दैन । यसरी गाई
मरे जानीजानी गाई मारेको मान्नु हुँदैन ।

**अंगुष्ठमात्रः स्थूलो वा बाहुमात्रः प्रमाणतः ।**
**आर्द्रस्तु सपलाशश्चदण्ड इत्यभिधीयते ॥२॥**

बूढी औंलो जति मोटो, एक हात लामो, काँचो र पात सहितको
गाईलाई सधाउने लौरो हुनु पर्दछ ।

**दण्डादूर्ध्वं यदन्येन प्रहरेद्वा निपातयेत् ।**
**प्रायश्चित्तं चरेत् प्रोक्तं द्विगुणं गोव्रतञ्चरेत् ॥३॥**

तोकिए बाहेकको लौरोले हिर्काएर गाईलाई जमिनमा लडाएमा त शास्त्रीय विधानले प्रायश्चित गर्नू र दोबर गोव्रत गर्नू ।

**रोधबन्धनयोक्त्राणि घातनञ्च चतुर्विधम् ।**
**एकपादञ्चरेद्रोधे द्विपादं बन्धने चरेत् ॥**
**योक्त्रेषु पादहीनं स्याच्चरेत् सर्वं निपातने ॥४॥**

रोक्दा, बाँध्दा, जोत्दा र पिट्दा गाईगोरु मरे चार थरी प्रायश्चित हुन्छ । रोक्नाले गाई मरे एकचौथाई, बाँध्नाले गाई मरे आधा, जोत्नाले साँढे मरे पौने र पिटेर गाई मरे पूरै प्रायश्चित गर्नू ।

**गोचरे च गृहे वापि दुर्गेष्वपि समेष्वपि ।**
**नदीष्वपि समुद्रेषु खातेऽप्यथ दरीमुखे ॥**
**दग्धदेशे मृताः गावः स्तम्भनाद्रोध उच्यते ॥५॥**

गौचरनमा, घरमा, दुर्गम स्थानमा, समतल जमिनमा, नदीमा, समुद्रमा, खाल्टोमा, गुफाको मुखमा र अग्निले जलेको स्थानमा रोक्नाले यदि गाईको मृत्यु भएमा त्यसलाई रोध (रोक्नू) भनिन्छ ।

**योक्त्रदामकडोरैश्च घण्टाभरणभूषणैः ।**
**गृहे वापि वने वापि बद्धा स्याद् गौर्मृता यदि ॥**
**तदेव बन्धनं विद्यात् कामाकामकृतञ्च यत् ॥६॥**

नार्ने डोरी, बाँध्ने डोरी, डोरी, घण्टी, गहना र आभूषणका कारण घर वा वनमा गाई मरेमा त जानेर वा नजानेर गरिएको यस्तो कर्मलाई बन्धन-हत्या नै मानिन्छ ।

**मृल्लेखे शकटे पङ्क्तौ भारे वा पीडितो नरैः ।**
**गोपतिर्मृत्युमाप्नोति योक्त्रो भवति तद्वधः ॥७॥**

हलो जोत्ने, गाडामा जोत्ने, लाममा हिँडाउने र भारी बोकाउने जस्ता मानिसले दुःख दिएको अवस्थामा साँढे मरेमा त्यसलाई योक्त्र (जोत्नाले हुने वध) भनिन्छ ।

मत्तः प्रमत्त उन्मत्तश्चेतनो वाप्यचेतनः ।
कामाकामकृतक्रोधो दण्डैर्हन्यादथोपलैः ॥
प्रहता वा मृता वापि तद्धि हेतुर्निपातने ॥८॥

खुशीमा, नशामा, उन्मत्त हुँदा, होसमा, बेहोसमा, जानेर वा नजानेर रिसाएको मानिसले ढुङ्गा वा लौरोले हिर्काएर गाईलाई मारे मार्नकै लागि त्यसो गरेको मानिन्छ वा हत्या हुन्छ ।

मूर्च्छितः पतितो वापि दण्डेनाभिहतः स तु ।
उत्थितस्तु यदा गच्छेत् पञ्च सप्त दशैव वा ॥९॥
ग्रासं वा यदि गृह्णीयात्तोयं वापि पिबेद्यदि ।
पूर्वव्याध्युपसृष्टश्चेत् प्रायश्चित्तं न विद्यते ॥१०॥

लाठोले हिर्काएको साँढे मूर्च्छा भए वा पछारिए अनि फेरी उठेर यदि पाँच, सात वा दश पाइला हिँड्दछ वा घाँस खान्छ भने वा पानी पिउँछ वा त्यो साँढे पहिले देखिकै रोगी भएमा त प्रायश्चित हुँदैन ।

पिण्डस्थे पादमेकन्तु द्वौ पादौ गर्भसम्मिते ।
पादोनं व्रतमुद्दिष्टं हत्वा गर्भमचेतनम् ॥११॥

गाईको गर्भ हत्यामा प्रारम्भिक भए एक चौथाई, पूरा भए आधा तथा गर्भपूरा भएर चेतना नआइसकेको भए पौने व्रत गर्नू भनी बताइन्छ ।

पादेऽङ्गरोमवपनं द्विपादे श्मश्रुणोऽपि च ।
त्रिपादे तु शिखावर्जं सशिखन्तु निपातने ॥१२॥

एक चौथाई प्रायश्चितमा कपाल, आधामा दाऱ्ही र जुँगा समेत, पौनेमा टुपी राखेर तथा हत्यामा टुपी समेतको मुण्डन गराउनू ।

पादे वस्त्रयुगञ्चैव द्विपादे कांस्यभाजनम् ।
पादोने गोवृषं दद्याच्चतुर्थे गोद्वयं स्मृतम् ॥१३॥

चौथाई व्रतमा एकजोडी कपडा, आधामा काँसको भाँडो, पौनेमा साँढे तथा पूर्ण प्रायश्चितमा दुई गाई वा साँढे दान गर्नू ।

**निष्पन्नसर्वगात्रन्तु दृश्यते वा सचेतनम् ।**
**अङ्गप्रत्यङ्गसम्पन्ने द्विगुणं गोव्रतं चरेत् ॥१४॥**

गर्भको शरीर पूर्ण हुँदा वा गर्भमा चेतना आएपछि र अङ्गप्रत्यङ्ग पूरा भएपछि गाईको हत्या भए दोबर गोव्रत गर्नू ।

**पाषाणेनैव दण्डेन गावो येनाभिघातिताः ।**
**श्रृङ्गभङ्गे चरेत् पादं द्वौ पादौ नेत्रघातने ॥१५॥**
**लाङ्गुले कृच्छ्रपादन्तु द्वौ पादावस्थिभञ्जने ।**
**त्रिपादञ्चैव कर्णे तु चरेत् सर्वं निपातने ॥१६॥**

ढुङ्गा या लाठोले हानेर गाईलाई विभिन्न चोट लाग्दा सिङ भाँचिए एक चौथाई, आँखा फुटे आधा, पुच्छर चुँडिए एक चौथाई कृच्छ्र, हाड भाँचिए आधा कृच्छ्र, कान च्यतिए पौने कृच्छ्र र हत्या हुँदा पूर्ण कृच्छ्र गर्नू ।

**श्रृङ्गभङ्गेऽस्थिभङ्गे च कटिभङ्गे तथैव च ।**
**यदि जीवति षण्मासान् प्रायश्चित्तं न विद्यते ॥१७॥**

सिङ भाँचिदा, हाड भाँचिदा र ढाड भाँचिदा यदि गाई छ महिनासम्म बाँचिरहे प्रायश्चित हुँदैन ।

**व्रणभङ्गे च कर्त्तव्यः स्नेहाभ्यङ्गस्तु पाणिना ।**
**यवसश्चोपहर्त्तव्यो यावद् दृढबलो भवेत् ॥१८॥**

घाऊ फुटे हातले त्यसमा तेलको मलम लगाउनु र जबसम्म त्यो साँढे दुरुस्त हुँदैन तबसम्म खानेकुरा दिइराख्नू ।

**यावत्सम्पूर्णसर्वाङ्गस्तावत्तं पोषयेन्नरः ।**
**गोरूपं ब्राह्मणास्याग्रे नमस्कृत्य विसर्जयेत् ॥१९॥**

जबसम्म घाउ पूरै भरिँदैन तबसम्म खुवाउनू, पियाउनू र गोरुपी त्यो बैललाई ब्राह्मणका अगिल्तिर नमस्कार गरी छोड्नू ।

**यद्यसम्पूर्णसर्वाङ्गो हीनदेहो भवेत्तदा ।**

**गोघातकस्य तस्यार्द्धं प्रायश्चित्तं विनिर्द्दिशेत् ॥२०॥**

यदि समयमा घाउ भरिएन र कमजोर भई रहेमा त ब्राह्मणले त्यो
गो-हत्यारालाई प्रायश्चितको आदेश दिनू ।

**काष्ठलोष्ठकपाषाणैः शस्त्रेणैवोद्धतो बलात् ।**
**व्यापादयति यो गान्तु तस्य शुद्धिं विनिर्द्दिशेत् ॥२१॥**

घमण्डी मानिस यदि काठ, डल्लो, ढुङ्गा र हतियारले जबर्जस्ती गाईलाई मार्दछ भने
(ब्राह्मणले) उसलाई शुद्ध हुन निर्देशन दिनू ।

**चरेत्सान्तपनं काष्ठे प्राजापत्यन्तु लोष्ठके ।**
**तप्तकृच्छ्रन्तु पाषाणे शस्त्रेचैवातिकृच्छ्रकम् ॥२२॥**

लौरोले मारे सान्तपन, डल्लाले मारे प्राजापत्य, ढुङ्गाले हिर्काएर मारे तप्तकृच्छ्र र
हतियारले हिर्काएर मारे अतिकृच्छ्र गर्नू ।

**पञ्च सान्तपने गावः प्राजापत्ये तथा त्रयः ।**
**तप्तकृच्छ्रे भवन्त्यष्टावतिकृच्छ्रे त्रयोदश ॥२३॥**

सान्तपनमा पाँच, प्राजापत्यमा तीन, तप्तकृच्छ्रमा आठ र अतिकृच्छ्रमा तेह्र गाई दान गर्नू ।

**प्रमापणे प्राणभृतां दद्यात्तत्प्रतिरूपकम् ।**
**तस्यानुरूपं मूल्यं वा दद्यादित्यब्रवीन्मनुः ॥२४॥**

मनुका अनुसार अर्काको जनावर मारे त्यस्तै जनावर वा त्यस
अनुरुपको मूल्य त्यसको मालिकलाई दिनु पर्दछ ।

**अन्यत्रालङ्कनलक्ष्मभ्यां वाहने दोहने तथा ।**
**सायं संगोपनार्थं च न दुष्येद्रोधबन्धयोः ॥२५॥**

चिन्ह लगाउँदा वा डाम्दा, नार्दा वा दुहुँदा, रक्षाका लागि साँझमा रोक्दा वा बाँध्दा
मानिसलाई दोष लाग्दैन ।

**अतिदोहेऽतिवाहे च नासिकाभेदने तथा ।**
**नदीपर्वतसञ्चारे प्रायश्चित्तं विनिर्दिशेत् ॥२६॥**

धेरै दोहेर, धेरै जोतेर, नाथ्री छेडेर र नदी-पर्वतमा लैजाँदा (गाईगोरु)
मरे (ब्राह्मणले) प्रायश्चित गर्न लगाउनू ।

**अतिदोहे चरेत्पादं द्वौ पादौ वाहने चरेत् ।**
**नासिके पादहीनं तु चरेत्सर्वं निपातने ॥२७॥**

धेरै दुहुँदा मरे चौथाई, धेरै जोत्दा मरे आधा, नाथ्री छेड्दा मरे पौने र
मार्नै खोजेर मरे पूरै प्रायश्चित गर्नू ।

**दहनाच्च विपद्येत अबद्धो वापि यन्त्रितः ।**
**उक्तं पराशरेणैव ह्येकपादं यथाविधि ॥२८॥**

यदि जलाएर वा नबाँधी जनावरलाई वशमा पार्न खोज्दा मरे पराशरले एक चौथाई
प्रायश्चित गर्नू भनेका छन् । प्रायश्चित विधिले गर्नू ।

**रोधनं बन्धनं चैव भारः प्रहरणन्तथा ।**
**दुर्गप्रेरणयोऽतन्त्रश्च निमित्तानि वधस्य षट् ॥२९॥**

रोक्नु, बाँध्नु, भारी बोकाउनु, हिर्काउनु, अक्करमा लैजानु र
जोत्नु-यी छ हत्याका कारण मानिएका छन् ।

**बन्धपाशसुगुप्ताङ्गो म्रियते यदि गोपशुः ।**
**भवने तस्य पापं स्यात् पश्चात्तापार्धमर्हति ॥३०॥**

घरमा डोरी वा बन्धनले पूर्ण सुरक्षित पशु त्यसैका कारण मर्दछ भने त्यो
घरलाई पाप लाग्दछ र उसले आधा प्रायश्चित गर्नु पर्दछ ।

**न नारिकेलैर्न च शाणबालैर्न चापि मौञ्जेन वल्कश्रृंखलैः ।**
**एतैस्तु गावो न निबन्धनीया बद्ध्वा तु तिष्ठेत् परशुंगृहीत्वा ॥३१॥**

न नरिवल जटाको, न सनको, न रौंको न त मूँजको डोरीले तथा न बोक्राको डोरी र साङ्लाले

नै गाई बाँध्नू । बाँधे बञ्चरो लिएर आवश्यक परेमा डोरी आदि काट्न तयार भइरहनू ।

**कुशैः काशैश्चबध्नीयाद् गोपशुं दक्षिणामुखम् ।**
**पाशलग्नाग्निदग्धेषु प्रायश्चित्तं न विद्यते ॥३२॥**

गाई आदि पशुलाई कुश वा काँसको डोरीले दक्षिण फर्काएर बाँध्नू । यसो
गर्दा घाँटी कसिएर वा जलेर मरे प्रायश्चित गर्नु पर्दैन ।

**यदि तत्र भवेत् काण्डं प्रायश्चित्तं कथं भवेत् ।**
**जपित्वा पावनीं देवीं मुच्यते तत्र किल्विषात् ॥३३॥**

यदि यस्तो दुर्घटना भए प्रायश्चित के गरी हुन्छ ? पवित्र गर्ने भएकी गायत्रीको
जप गर्नू, मानिस त्यो पापबाट मुक्त हुन्छ ।

**प्रेरयन् कूपवापीषु वृक्षाच्छेदेषु पातयन् ।**
**गवाशनेषु विक्रीणंस्ततः प्राप्नोति गोवधम् ॥३४॥**

गाई-साँढेलाई कुवा, पोखरी आदिमा हुले वा काट्न लागेको रुखमनि लगे अथवा
गोभक्षीलाई लगेर बेचे गोहत्याको पाप प्राप्त गर्दछ ।

**आराधितस्तु यः कश्चिद्भिन्नकक्षो यदा भवेत् ।**
**श्रवणं हृदयं भिन्नं मग्नो वा कूपसङ्कटे ॥३५॥**
**कूपादुत्क्रमणे चैव भग्नो वा ग्रीवपादयोः ।**
**स एव म्रियते तत्र त्रीन् पादांस्तु समाचरेत् ॥३६॥**

सेवा गरिएको कुनै साँढेले जब आफ्ना कोख फुटाल्छ वा उसका कान वा हृदयमा चोट लाग्छ
वा कुवा, गल्छीमा खसी त्यहाँबाट निक्लँदा खेरी गर्धन, खुट्टा आदिमा चोटपटक लागी त्यहीँ
मर्छ भने तीनचौथाई प्रायश्चित गर्नू ।

**कूपखाते तटीबन्धे नदीबन्धे प्रपासु च ।**
**पानीयेषु विपन्नानां प्रायश्चित्तं न विद्यते ॥३७॥**

कुवा, ताल, नदीको तट, नदी, जलशाला आदि जस्ता जल हुने
स्थानमा मर्ने पशुको लागि प्रायश्चित हुँदैन ।

**कूपखाते तटीखाते दीर्घदाते तथैव च ।**
**स्वल्पेषु धर्मखातेषु प्रायश्चित्तं न विद्यते ॥३८॥**

कुवा खन्दा, किराना खन्दा, ठूलठूला तलाउ खन्दा तथा धर्मकार्यका लागि ससाना खाल्टा खन्दा मर्ने बैल आदिको प्रायश्चित हुँदैन ।

**वेश्मद्वारे निवासेषु यो नरः खातमिच्छति ।**
**स्वकार्यगृहखातेषु प्रायश्चित्तं विनिर्दिशेत् ॥३९॥**

घरको द्वारमा वा घरमा जसले खाल्टो बनाई त्यसमा गाई परेर मरे उसले खाल्टो खन्ने कामको लागि प्रायश्चित गर्नु पर्दछ ।

**निशि बन्धनिरुद्धेषु सर्पव्याघ्रहतेषु च ।**
**अग्निविद्युद्विपन्नानां प्रायश्चित्तं न विद्यते ॥४०॥**

रातमा सुरक्षाका लागि बाँध्दा वा रोक्दा सर्प, बाघ आदिबाट मारिए वा अग्नि र चट्याङ्ले नष्ट भए त्यस्ता पशुको प्रायश्चित हुँदैन ।

**ग्रामघाते शरौघेण वेश्मभङ्गनिपातने ।**
**अतिवृष्टिहतानाञ्च प्रायश्चित्तं न विद्यते ॥४१॥**

वाणैवाणले गाउँ सखाप भएर, घर लडेर तथा घनघोर पानी परेर मर्ने पशुको प्रायश्चित हुँदैन ।

**संग्रामे प्रहतानाञ्च ये दग्धा वेश्मकेषु च ।**
**दावाग्निग्रामघातेषु प्रायश्चित्तं न विद्यते ॥४२॥**

युद्धमा मरेका, घरभित्र जलेका, जङ्गलमा लागेको आगोमा जलेका र गाउँको विनाशमा मारिएका पशुको प्रायश्चित हुँदैन ।

**यन्त्रिता गौश्चिकित्सार्थं मूढगर्भविमोचने ।**
**यत्ने कृते विपद्येत प्रायश्चित्तं न विद्यते ॥४३॥**

औषधीगर्न वा मरेको गर्भ निकाल्न गाईलाई अँठ्याइएको छ र प्रयत्न

गर्दागर्दै पनि त्यो गाई मर्दछ भने प्रायश्चित हुँदैन ।

**व्यापन्नानां बहूनाञ्च बन्धने रोधनेऽपि वा ।**
**भिषग्मिथ्योपचारे च प्रायश्चित्तं विनिर्दिशेत् ॥४४॥**

बाँधेको वा रोकेको कारणले धेरै पशुको विनाश भए वा वैद्यले गलत उपचार
गरेर पशुको हत्या भएमा भने प्रायश्चित गर्न लगाउनू ।

**गोवृषाणां विपत्तौ च यावन्तः प्रेक्षका जनाः ।**
**न वारयन्ति तां तेषां सर्वेषां पातकं भवेत् ॥४५॥**

विपत्तिमा परेका गाई-साँढेलाई यदि त्यसबाट छुटाउन मद्दत गर्दैनन्
भने देख्नेहरु सबैलाई पाप लाग्दछ ।

**एको हतो यैर्बहुभिः समेतैर्न ज्ञायते यस्य हतोऽभिधानात् ।**
**दिव्येन तेषामुपलभ्य हन्ता निवर्त्तनीयो नृपसन्नियुक्तैः ॥४६॥**

धेरै मिली एक साँढे मारे मार्नेको नामठेगाना पत्ता नलागे राजाले दिव्यद्वारा
हत्यारा पत्ता लगाउनू र फेरी त्यसो गर्नबाट रोक्नू ।

**एका चेद्बहुभिः कापि दैवाद् व्यापादिता भवेत् ।**
**पादं पादञ्च हत्यायाश्चरेयुक्ते पृथक् पृथक् ॥४७॥**

कुनै एउटा गाई दैववश धेरै व्यक्तिका हातबाट मारिए ती सबैले छुट्टाछुट्टै चौथाई प्रायश्चित गर्नू ।

**हते तु रुधिरं दृश्यं व्याधिग्रस्तः कृशो भवेत् ।**
**लाला भवति दृष्टे तु एवमन्वेषणं भवेत् ॥४८॥**

गाई आदि मारिँदा कसकोमा रगत लागेको छ हेर्नू । हत्यारा चिन्ताले गर्दा व्याधिग्रस्त र दुब्लो
हुँदै गइरहेको हुन्छ । देखेको खण्डमा उसलाई पसिना आउँछ । यसरी हत्यारा
खोज्न सकिन्छ ।

**मनुना चैवमेकेन सर्वशास्त्राणि जानता ।**
**प्रायश्चित्तन्तु तेनोक्तं गोघ्नः चान्द्रायणं चरेत् ॥४९॥**

एक्लैले सबै शास्त्र जानेका मनुले यस्तो प्रायश्चितको विधान गरेका छन् कि गोहत्या गर्नेले चान्द्रायण व्रत गरोस् ।

**केशानां रक्षणार्थाय द्विगुणं गोव्रतं चरेत् ।**
**द्विगुणे व्रत आदिष्टे दक्षिणा द्विगुणा भवेत् ॥५०॥**

कपाल मुण्डनबाट जोगिन चाहनेले दोबर गोव्रत गर्नू । दोबर गो-व्रतको आदेशमा दक्षिणा पनि दोबर नै हुन्छ ।

**राजा वा राजपुत्रो वा ब्राह्मणो वा बहुश्रुतः ।**
**अकृत्वा वपनं तस्य प्रायश्चित्तं विनिर्दिशेत् ॥५१॥**

राजा, राजकुमार वा विद्वान ब्राह्मण त्यसलाई मुण्डन नगराई प्रायश्चित गर्ने आज्ञा देऊन् ।

**यस्य न द्विगुणं दानं केशश्चपरिरक्षितः ।**
**तत्पापं वपनं तस्य तिष्ठेत वक्ता च नरकं व्रजेत् ॥५२॥**

कसैले दोबर दक्षिणा दिएन र केशमुण्डन पनि गराएन भने त पाप बसिरहन्छ र प्रायश्चितको आज्ञा दिने नरकमा पर्दछ ।

**यत्किञ्चित् क्रियते पापं सर्वं केशेषु तिष्ठति ।**
**सर्वान् केशान् समुद्धृत्यच्छेदयेदङ्गुलिद्वयम् ॥५३॥**

जति पनि पाप गरिन्छ त्यो सबै कपालमा गएर बस्ने हुनाले सबै कपाललाई माथि उठाई दुई अङ्गुल काट्नू ।

**एवं नारीकुमारीणां शिरसो मुण्डनं स्मृतम् ।**
**न स्त्रियाः केशवपनं न दूरे शयनाशनम् ॥५४॥**

कुमारी केटीको मुण्डन यसै गरी गर्ने बताइएको छ । विवाहिता स्त्रीको केश-मुण्डन नगर्नु उनले पतिबाट टाढा रहेर सुत्न र खान हुँदैन ।

**न च गोष्ठे वसेद्रात्रौ न दिवा गा अनुव्रजेत् ।**
**नदीषु सङ्गमे चैव अरण्येषु विशेषतः ॥५५॥**

स्त्रीले रातमा गाईगोठमा नबस्नू । दिनमा गाईको पछिपछि नहिँड्नू । विशेषतः नदी, नदीका सङ्गम र वनमा नजानू ।

**न स्त्रीणामजिनं वासो व्रतमेवं समाचरेत् ।**
**त्रिसन्ध्यं स्नानमित्युक्तं सुराणामर्च्चनं तथा ॥५६॥**

स्त्रीले मृगचर्म नओढ्नु व्रतमात्र गर्नू । तीनै सन्ध्यामा नुहाउनु र देवताको पूजाआजा गर्नू ।

**बन्धुमध्ये व्रतं तासां कृच्छ्रचान्द्रायणादिकम् ।**
**गृहेषु नियतं तिष्ठेच्छुचिर्नियममाचरेत् ॥५७॥**

स्त्रीले गर्ने कृच्छ्र चान्द्रायण आदि व्रत बन्धुहरुका बीचमा गर्नू । नियमित रुपमा घरमै बसेर पवित्र भई नियमको पालना गर्नू ।

**इह यो गोवधं कृत्वा प्रच्छादयितुमिच्छति ।**
**स याति नरकं घोरं कालसूत्रमसंशयम् ॥५८॥**

जसले यो लोकमा गाई मारी त्यो कुरा लुकाउन चाहन्छ, उ निःसन्देह कालसूत्र नाम गरिएको डरलाग्दो नरकमा जान्छ ।

**विमुक्तो नरकात्तस्मान्मर्त्त्यलोके प्रजायते ।**
**क्लीवो दुःखी च कुष्ठी च सप्त जन्मानि वै नरः ॥५९॥**

नरकबाट छुटे पछि त्यो (गोहत्यारा) मानिस मर्त्यलोकमा जन्मन्छ र सात जन्मसम्म नपुंसक, दुःखी र कुष्ठरोगी भएर रहन्छ ।

**तस्मात् प्रकाशयेत् पापं स्वधर्मं सततं चरेत् ।**
**स्त्रीबालभृत्यगोविप्रेष्वतिकोपं विवर्जयेत् ॥६०॥**

अतः मानिसले (गोहत्या ) पापलाई उजागर गर्नू । आफ्नो धर्मको निरन्तर पालना गर्नू । स्त्री-बालक-नोकर-गाई र ब्राह्मणप्रति धेरै क्रोध नगर्नू ।

**॥ इति श्रीपाराशरे धर्मशास्त्रे नवमोऽध्यायः ॥९॥**
**मोहनप्रसाद सापकोटाबाट श्रीपराशरस्मृतिको नवौं अध्याय नेपालीमा भावानुवाद गरेर सकियो ।**



आदितः श्लोकानां समष्टचङ्काः-३६७+६०=४२७
शुरुदेखिको श्लोकसंख्याः-३६७+६०=४२७



## ॥ अथ दशमोऽध्यायः ॥
## (दशौं अध्याय)
## ॥ अगम्यागमनप्रायश्चित्तवर्णनम् ॥
## (गर्न नहुनेसँग सहवास गरेको प्रायश्चित)

**चातुवर्ण्यस्य सर्वत्र हीयं प्रोक्ता तु निष्कृतिः ।**
**अगम्यागमने चैव शुद्धौ चान्द्रायणञ्चरेत् ॥१॥**

शास्त्रमा चारै वर्णका लागि यही नै पार पाउने उपाय बताइएको छ कि अयोग्या स्त्री गमन गर्नेले शुद्ध हुन चान्द्रायण व्रत गरोस् ।

**एकैकं ह्रासयेत् पिण्डं कृष्णे शुक्ले च वर्द्धयेत् ।**
**अमावस्यां न भुञ्जीत एष चान्द्रायणो विधिः ॥२॥**

कृष्णपक्षमा एक, एक गाँस घटाउँदै र शुक्लपक्षमा एक, एक गाँस बढाउँदै लगी औंसीमा निराहार बस्नू-यो चान्द्रायण व्रतको विधि हो ।

**कुक्कुटाण्डप्रमाणन्तु ग्रासञ्च परिकल्पयेत् ।**
**अन्यथा भावदुष्टस्य न धर्मो नैव शुध्यति ॥३॥**

यि गाँस कुखुराको फूलजत्रा बनाउनू । विपरित गर्ने दुष्ट विचारका मानिसलाई न धर्म हुन्छ न ति शुद्ध हुन्छन् ।

**प्रायश्चित्ते ततश्चीर्णे कुर्य्याद् ब्राह्मणभोजनम् ।**
**गोद्वयं वस्त्रयुग्मञ्च दद्याद्विप्रेषु दक्षिणाम् ॥४॥**

प्रायश्चित गरेपछि ब्राह्मणभोजन गराउनू तथा दुई वटा गाई र एक जोर वस्त्र ब्राह्मणलाई दक्षिणामा दिनू ।

**चाण्डालीञ्च श्वपाकीञ्च ह्यभिगच्छति यो द्विजः ।**
**त्रिरात्रमुपवासी स्याद्विप्राणामनुशासनात् ॥५॥**

जो द्विज चाण्डाल्नी र श्वपाकीलाई भोग्दछ उसले ब्राह्मणका आज्ञाले तीन दिनसम्म उपवास बसोस् ।

**सशिखं वपनं कुर्यात् प्राजापत्यत्रयञ्चरेत् ।**
**ब्रह्मकूर्चं ततः कृत्वा कुर्य्याद् ब्राह्मणतर्पणम् ॥६॥**

टुपीसमेत कपाल खौरी तीन प्राजापत्य व्रत गर्नू अनी ब्रह्मकूर्च गरी ब्राह्मणलाई भोजनले तृप्त पार्नू ।

**गायत्रीञ्च जपेन्नित्यं दद्याद् गोमिथुनद्वयम् ।**
**विप्राय दक्षिणां दद्याच्छुद्धिमाप्नोत्यसंशयम् ॥७॥**

नित्य गायत्री जप्नु, दुई जोडी साँढे दान गर्नू र ब्राह्मणलाई दक्षिणा दिनू । यसरी व्रत गर्नाले निःसन्देह उसले शुद्धता प्राप्त गर्दछ ।

**क्षत्रियश्चापि वैश्यो वा चाण्डालीं गच्छतो यदि ।**
**प्राजापत्यद्वयं कुर्य्याद्दद्याद् गोमिथुनन्तथा ॥८॥**

चाण्डाल्नीलाई सम्भोग गर्ने क्षत्रिय र वैश्यले दुई वटा प्राजापत्य व्रत गर्नू र एक जोडी बैल दान गर्नू ।

**श्वपाकीमथ चाण्डालीं शूद्रो वै यदि गच्छति ।**
**प्राजापत्यं चरेत्कृच्छ्रं दद्याद् गोमिथुनन्तथा ॥९॥**

श्वपाकी वा चाण्डाल्नीलाई सम्भोग गर्ने शूद्रले एउटा प्राजापत्य कृच्छ्र व्रत गर्नू र एक जोडी बैल दान गर्नू ।

**मातरं यदि गच्छेत भगिनीं पुत्रिकान्तथा ।**
**एतास्तु मोहितो गत्वा त्रीन् कृच्छ्रांस्तु समाचरेत् ॥१०॥**

माता, बहिनी र छोरीका साथ तथा जानाजान सम्भोग गर्ने मानिसले तीन कृच्छ्र गर्नू ।

**चान्द्रायणत्रयं कुर्य्याच्छिश्नच्छेदेन शुध्यति ।**
**मातृष्वसृगमे चैव आत्ममेढ्रनिकृन्तनम् ॥११॥**

तीन चान्द्रायण गर्नु र लिङ्ग कटाउनू शुद्ध हुन्छ । माताकी बहिनी भोग गरेमा पनि आफ्नो लिङ्ग कटाउनु नै प्रायश्चित हो ।

**अज्ञानात्तान्तु यो गच्छेत् कुर्य्याच्चान्द्रायणद्वयम् ।**
**दशगोमिथुनन्दद्याच्छुद्धिः पराशरोऽब्रवीत् ॥१२॥**

अनजानमा सम्भोग गरिए दुई चान्द्रायण व्रत गर्नू, दश जोडी साँढे दान गर्नु शुद्ध हुन्छ भनी पराशरले बताएका छन् ।

**पितृदारान् समारुह्य मातुराप्ताञ्च भ्रातृजाम् ।**
**गुरुपत्नीं स्नुषाञ्चैव भ्रातृभार्य्यां तथैव च ॥१३॥**
**मातुलानीं सगोत्राञ्च प्राजापत्यत्रयञ्चरेत् ।**
**गोद्वयं दक्षिणां दत्त्वा शुध्यते नात्र संशयः ॥१४॥**

सौतेनी आमाहरु, आमाका सहेलीहरु, भतिजी, गुरुपत्नी, पुत्र-बधू, भाउजू, माइजू र सगोत्रीया स्त्रीलाई सम्भोग गरे तीन प्राजापत्य गर्नु र दुई गाई दक्षिणामा दिनु शुद्ध हुन्छ, यसमा शङ्का छैन ।

**पशुवेश्यादिगमने महिष्युष्ट्रीकपीस्तथा ।**
**खरीञ्च शूकरीं गत्वा प्राजापत्यं समाचरेत् ॥१५॥**

पशु, वेश्या आदि तथा भैंसी, ऊँट, बाँदर्नी, गधैनी र सुँगुर्नीलाई गमन गरे प्राजापत्य व्रत गर्नू ।

**गोगामी च त्रिरात्रेण गामेकं ब्राह्मणे ददत् ।**
**महिष्युष्ट्रीखरीगामी त्वहोरात्रेण शुध्यति ॥१६॥**

गोगमन गर्ने तीन रातको व्रत गरी ब्राह्मणलाई एक गाई दान गर्नाले र भैंसी, ऊँट र गधैनी गमन गर्ने एक दिनरातको व्रतले शुद्ध हुन्छ ।

**डामरे समरे वापि दुर्भिक्षे वा जनक्षये ।**

**वन्दिग्राहे भयार्त्ते वा सदा स्वस्त्रीं निरीक्षयेत् ॥१७॥**

भयमा, युद्धमा, अकालमा, जनसंहारमा, बन्दी हुँदा तथा
आतङ्कका समयमा सधैँ आफ्नी पत्नीको हेरचाह गर्नू ।

**चाण्डालैः सह सम्पर्कं या नारी कुरुते ततः ।**
**विप्रान् दश वरान् गत्वा स्वकं दोषं प्रकाशयेत् ॥१८॥**

जो नारी चाण्डालसँग सम्पर्क गर्दछे, उसले उत्तम दश ब्राह्मणका समिपमा
गई आफूले गरेको दुष्कर्म बताउनू ।

**आकण्ठसम्मिते कूपे गोमयोदककर्दमे ।**
**तत्र स्थित्वा निराहारा त्वेकरात्रेण निष्क्रमेत् ॥१९॥**

घाँटीसम्म पानी आउने जति गहिरो पानी र हिलोले भरिएको
खाल्टोमा एक रात बसेर बाहिर आउनू ।

**ससिखं वपनं कृत्वा भुञ्जीयाद्यावकौदनम् ।**
**त्रिरात्रमुववासित्वं ह्येकरात्रं जलं वसेत् ॥२०॥**

टुपी समेत खौरेर जौ र भात खानू, तीन रात उपवास बसी एक रात जलमा निवास गर्नू ।

**शङ्खपुष्पीलतामूलं पत्रञ्च कुसुमं फलम् ।**
**सुवर्णं पञ्चगव्यञ्च क्वाथयित्वा पिबेज्जलम् ॥२१॥**

शङ्खपुष्पी लहराको हाँगा, जरा, पात, फूल, फल तथा सुन र
पञ्चगव्यको काँढा पानी बनाएर पिउनू ।

**एकभक्तं चरेत् पश्चाद्यावत् पुष्पवती भवेत् ।**
**व्रतं चरति तद्यावत्तावत् संवसते बहिः ॥२२॥**

अनि जबसम्म रजस्वला हुन्न तबसम्म एक समयमात्र भात खानू । जबसम्म व्रत
पालना गर्ने हो तबसम्म घर बाहिर बास गर्नू ।

**प्रायश्चित्ते ततश्चीर्णे कुर्य्याद् ब्राह्मणभोजनम् ।**
**गोद्वयं दक्षिणां दद्याच्छुद्धिः परशरोऽब्रवीत् ॥२३॥**

प्रायश्चित पछि ब्राह्मणलाई भोजन गराउनू । दुई वटा गाई दानमा दिनू । यो नै शुद्धिको उपाय हो भनी पराशरले बताएका छन् ।

**चातुर्वर्णस्य नारीणां कृच्छ्रचान्द्रायणं व्रतम् ।**
**यथा भूमिस्तथा नारी तस्मात्तां न तु दूषयेत् ॥२४॥**

चारै वर्णका नारीका लागि कृच्छ्र र चान्द्रायण व्रतको विधान छ । भूमि जस्तै नारी पवित्र हुने हुनाले उनलाई दोष नलगाउनू ।

**वन्दिग्राहेण या भुक्ता हत्वा बद्ध्वा बलाद्भयात् ।**
**कृत्वा सान्तपनं कृच्छ्रं शुध्येत् पराशरोऽब्रवीत् ॥२५॥**

थुनेर, पिटेर, बाँधेर, बलपूर्वक वा तर्साएर जुन स्त्रीलाई भोग गरिन्छ, ती सान्तपन कृच्छ्रले शुद्धिन्छिन् भनी पराशरले भनेका छन् ।

**सकृद् भुक्त्वा तु या नारी नेच्छन्ती पापकर्मभिः ।**
**प्राजापत्येन शुध्येत ऋतुप्रस्रवणेन तु ॥२६॥**

जबर्जस्ती पापीहरुबाट एक पटक भोगिएकी नारी प्राजापत्य व्रतले र परसर्नाले शुद्ध हुन्छे ।

**पतत्यर्द्धं शरीरस्य यस्य भार्य्या सुरां पिबेत् ।**
**पतितार्द्धशरीरस्य निष्कृतिर्न विधीयते ॥२७॥**

जसकी पत्नी रक्सी पिउँछे त्यसको आधा शरीर पतित हुन्छ र आधा शरीर पतित हुने त्यो लोग्नेका लागि कुनै प्रायश्चित छैन ।

**गायत्रीं जपमानस्तु कृच्छ्रं सान्तपनं चरेत् ॥२८॥**

उसले गायत्री जप गर्दै कृच्छ्रसान्तपन व्रत गर्नू ।

**गोमूत्रं गोमयं क्षीरं दधि सर्पिः कुशोदकम् ।**

**एकरात्र्युपवासश्च कृच्छ्रं सान्तपनं स्मृतम् ॥२९॥**

गहुँत, गोबर, दूध, दही, घिउ, कुश-पानी खाई गरिने एक रातको उपवास समेतको व्रतलाई कृच्छ्र-सान्तपन व्रत मानिएको छ ।

**जारेण जनयेद् गर्भं गते त्यक्ते मृते पतौ ।**
**तां त्यजेदपरे राष्ट्रे पतितां पापकारिणीम् ॥३०॥**

पति बाहिर हुँदा, पतिले त्याग्दा वा पति मरेका बेलामा जुन स्त्री जारबाट गर्भ जन्माउँदछे, त्यस्ती पतिता र पापिनीलाई देश निकाला गर्नू ।

**ब्राह्मणी तुयदा गच्छेत् परपुंसा समन्विता ।**
**सा तु नष्टा विनिर्दिष्टा न तस्यां गमनं पुनः ॥३१॥**

जब कुनै ब्राह्मणी परपुरुषसँग भाग्दछे तब तिनलाई नष्टा भनिन्छ र फेरी फर्काउने काम गर्नु हुँदैन ।

**कामान्मोहाद्यदा गच्छेत्त्यक्त्वा बन्धून् सुतान् पतिम् ।**
**सा तु नष्टा परे लोके मानुषेषु विशेषतः ॥३२॥**

जब कुनै स्त्री स्वेच्छाले वा अज्ञानमा बन्धुवान्धव, पुत्र र पतिलाई छाडी हिँड्दछे तिनलाई परलोकमा र विशेषतः मनुष्यलोकमा नष्टा मानिन्छ ।

**मदमोहगता नारी क्रोधाद् दण्डादिताडिता ।**
**अद्वितीयं गता चैव पुनरागमनं भवेत् ॥३३॥**

मद र मोहमा परेकी नारी रिसाएर लौरो आदिले पिटिएर एक्लै घर छोडी हिँडेको भए घर फर्कने काम हुन सक्छ ।

**दशमे तु दिने प्राप्ते प्रायश्चित्तं न विद्यते ।**
**दशाहं न त्यजेन्नारी त्यजेन्नष्टश्रुतां तथा ॥३४॥**

दश दिन बितेपछि घर फर्कने काम हुँदैन । यसैले नारीले दश दिनसम्म घरबाट बाहिर नबस्नू । त्यसभन्दा पछि पनि नष्टा भएको सुनिएमा उनलाई त्याग्नू ।

**भर्त्ता चैकं चरेत् कृच्छ्रं कृच्छ्रार्द्धं चैव बान्धवाः ।**
**तेषां भुक्त्वा च पीत्वा च अहोरात्रेण शुध्यति ॥३५॥**

घर फर्के पछि [१] लोग्नेले एक कृच्छ्र र उसका आफन्तले आधा कृच्छ्र गर्नू । तिनको घरको खाएपिए एक दिनरातको व्रतले शुद्ध हुन्छ ।
*नोट-१. बिना अनुमति दश दिन घर बाहिर रही घर फर्कने पत्नी ।*

**ब्राह्मणी तु यदा गच्छेत् परपुंसा विवर्जिता ।**
**गत्वा पुंसां शतं याति त्यजेयुस्तान्तु गोत्रिणः ॥३६॥**

नजा भन्दाभन्दै परपुरुषसँग जान्छे र गएर अनेक पुरुषसँग सम्पर्क गर्दछे भने त्यस्ती ब्राह्मणीलाई सगोत्रीले त्याग्नू ।

**पुंसो यदि गृहं गच्छेत्तदशुद्धं गृहं भवेत् ।**
**पितृमातृगृहं यच्च जारस्यैव तु यद् गृहम् ॥३७॥**

यदि उनी कुनै पुरुषको घरमा गइन् भने त्यो घर त अशुद्ध हुन्छ हुन्छ मातापिताको घर पनि जारकै घर सरह मानिई अशुद्ध हुन्छ ।

**उल्लिख्य तद् गृहं पश्चात् पञ्चगव्येन शुध्यति ।**
**त्यजेन्मृण्मयपात्राणि वस्त्रं काष्ठञ्च शोधयेत् ॥३८॥**

त्यसरी अशुद्ध भएको घरलाई खोस्रेर पञ्चगव्य छर्कनू, माटाका भाँडा भए फाल्नू तथा कपडा र काठको शुद्धि गर्नू ।

**सम्भारान् शोधयेत् सर्वान् गोकेशैश्च फलोद्भवान् ।**
**ताम्राणि पञ्चगव्येन कांस्यानि दश भस्मभिः ॥३९॥**

फलले बनेका सबैलाई गाईको रौंको चमरले शुद्धि गर्नू । ताम्रपात्र पञ्चगव्यले र काँसका भाँडा खरानीले दश पटक माझ्नू ।

**प्रायश्चित्तं चरेद्विप्रो ब्राह्मणैरुपपादितम् ।**
**गोद्वयं दक्षिणां दद्यात् प्राजापत्यं समाचरेत् ॥४०॥**

ब्राह्मणले, ब्राह्मणले बताए अनुसार प्रायश्चित गर्नू । दुई वटा गाई दक्षिणामा दिनू र दुई वटा प्राजापत्य गर्नू ।

**इतरेषामहोरात्रं पञ्चगव्येन शोधनम् ।**
**सपुत्रः सहभृत्यश्च कुर्यात् ब्राह्मणभोजनम् ॥४१॥**

ब्राह्मण बाहेक अरुहरु दिनरात उपवास बसी पञ्चगव्यले शुद्ध हुन्छन् । तिनले छोरा र सेवकसँगै ब्राह्मणलाई खुवाउनू ।

**आकाशं वायुरग्निश्च मेध्यं भूमिगतं जलम् ।**
**न दुष्यन्तीह दर्भाश्च यज्ञेषु चमसास्तथा ॥४२॥**

आकाश, वायु, अग्नि, जमिनमा रहेको पवित्र जल, कुश र यज्ञका प्रयोग गरिने भाँडा यस संसारमा कहिल्यै अपवित्र हुँदैनन् ।

**उपवासैर्व्रतैः पुण्यैः स्नानसन्ध्यार्च्चनादिभिः ।**
**जपैर्होमैस्तथा दानैः शुध्यन्ते ब्राह्मणाः सदा ॥४३॥**

उपवास, व्रत, पुण्यकर्म, स्नान, सन्ध्याकर्म, अर्चना आदि तथा जप, होम, र दानले ब्राह्मण सधैँ शुद्ध हुन्छन् ।

॥ इति श्रीपाराशरे धर्मशास्त्रे दशमोऽध्यायः ॥१०॥
मोहनप्रसाद सापकोटाबाट श्रीपराशरस्मृतिको दशौँ अध्याय
नेपालीमा भावानुवाद गरेर सकियो ।



आदितः श्लोकानां समष्टयङ्काः-४२७+४३=४७०
शुरुदेखिको श्लोकसंख्या :-४२७+४३=४७०



## ॥ अथैकादशोऽध्यायः ॥
## (एघारौं अध्याय)
## ॥ अभक्ष्यभक्षणप्रायश्चित्तवर्णनम् ॥
## (खान नहुने कुरा खाएको प्रायश्चित)

**अमेध्यरेतो गोमांसं चाण्डालान्नमथापि वा ।**

**यदि भुक्तन्तु विप्रेण कृच्छ्रं चान्द्रायणञ्चरेत् ॥१॥**

ब्राह्मणद्वारा यदि अपवित्र वस्तु, वीर्य, गोमांस, चाण्डालको अन्न खाइएको छ
भने त उसले चान्द्रायण व्रत गर्नू ।

**तथैव क्षत्रियो वैश्यस्तदर्द्धन्तु समाचरेत् ।**
**शूद्रोऽप्येवं यदा भुङ्क्ते प्राजापत्यं समाचरेत् ॥२॥**

त्यसैगरी क्षत्रिय र वैश्यले खाए त्यसको आधा व्रत गर्नू । शूद्रले खाए प्राजापत्य व्रत गर्नू ।

**ञ्चगव्यं पिबेच्छूद्रो ब्रह्मकूर्चं पिबेत् द्विजः ।**
**एकद्वित्रिचतुर्गाश्च दद्याद्विप्राद्यनुक्रमात् ॥३॥**

शूद्रले पञ्चगव्य र द्विजले ब्रह्मकूर्च पिउनू । चारै वर्णले क्रमशः एक, दुई,
तीन र चार गाई दान गर्नू ।

**शूद्रान्नं सूतकस्यान्नमभोज्यस्यान्नमेव च ।**
**शङ्कितं प्रतिषिद्धान्न पूर्वोच्छिष्टं तथैव च ॥४॥**
**यदि भुक्तन्तु विप्रेण अज्ञानादापदापि वा ।**
**ज्ञात्वा समाचरेत् कृच्छ्रं ब्रह्मकूर्चन्तु पावनम् ॥५॥**

शूद्रको अन्न, सूतकको अन्न, खान नहुनेको, शङ्कास्पद, निषेधित अन्न र पहिले जुठो हालेको
अन्न ब्राह्मणद्वारा अनजानमा वा आपत्कालमा खाइयो भने थाहा पाए पछि कृच्छ्र व्रत गर्नू ।
ब्रह्मकूर्चले पनि यसको शुद्धि गर्दछ ।

**व्यालैर्नकुलमार्जारैरन्नमुच्छिष्टतं यदा ।**
**तिलदर्भोदकैः प्रोक्ष्य शुध्यते नात्र संशयः ॥६॥**

जब सर्प, न्याहुरीमुसो र बिरालोले अन्न जूठो पार्दछन् तब त्यो अन्न तिल मिसिएको
कुश-पानी छर्केर शुद्ध हुन्छ, यसमा शङ्का छैन ।

**शूद्रोऽप्यभोज्यं भुक्त्वान्नं पञ्चगव्येन शुध्यति ।**
**क्षत्रियो वापि वैश्यश्च प्राजापत्येन शुध्यति ॥७॥**
शूद्र पनि अभोज्य अन्न खाए पछि पञ्चगव्यले शुद्ध हुन्छ ।

क्षत्रिय र वैश्य प्राजापत्यले शुद्ध हुन्छन् ।

**एकपंक्त्युपविष्टानां विप्राणां सहभोजने ।**
**यद्येकोऽपि त्यजेत् पात्रं शेषमन्नं न भोजयेत् ॥८॥**

ब्राह्मणहरु हारमा बसेर खान लाग्दा कुनै एकले खाना खाइरहेको भाँडा त्याग गरेमा
अरु कुनै ब्राह्मणले पनि बाँकी अन्न नखानू ।

**मोहाद्वा लोभतस्तत्र पङ्क्तावुच्छिष्टभोजने ।**
**प्रायश्चित्तं चरेद्विप्रः कृच्छ्रं सान्तपनन्तथा ॥९॥**

जुन ब्राह्मणले (ब्राह्मणहरु हारमा बसेर खान लाग्दा कुनै एकले खाना खाइरहेको भाँडा त्याग
गर्दा) अज्ञान वा लोभले त्यसपछि हारमा बसेर खान्छ त्यसले प्रायश्चितका लागि
कृच्छ्र सान्तपन गर्नू ।

**पीयूषश्वेतलसुनवृन्ताकफलगृञ्जनम् ।**
**पलाण्डुं वृक्षनिर्य्यासं देवस्वं कवकानि च ॥१०॥**

थाहा नपाएर बिहाएको सात दिन भित्रको गाईको दूध, सेतो लसुन, भ्यान्टा,
सलगम(गाजर), वृक्षको चोप, देव-द्रव्य ,प्याज र च्याउ तथा... ।

**उष्ट्रीक्षीरमविक्षीरमज्ञानाद् भुञ्जति द्विजः ।**
**त्रिरात्रमुपवासी स्यात् पञ्चगव्येन शुध्यति ॥११॥**

..ऊँट र भेडीको दूध खाने ब्राह्मण तीन रात उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**मण्डूकं भक्षयित्वा च मूषिकामांसमेव च ।**
**ज्ञात्वा विप्रस्त्वहोरात्रं यावकान्नेन शुध्यति ॥१२॥**

भ्यागुतो वा मुसा खाइएको थाहा पाए ब्राह्मणले एक दिनरात
जौजन्य आहार खानाले शुद्धि हुन्छ ।

**क्षत्रियो वापि वैश्यो वा क्रियावन्तौ शुचिव्रतौ ।**
**तद्गृहेषु द्विजैर्भोज्यं हव्यकव्येषु नित्यशः ॥१३॥**

क्षत्रिय वा वैश्यले कुनै कर्म गरिरहेका वा शुद्धताको व्रत बसिरहेका भए यज्ञ र श्राद्धमा नित्य ब्राह्मणलाई घरमा बोलाई खुवाउनू ।

**घृतं तैलं तथा क्षीरं गुडं तैलेन पाचितम् ।**
**गत्वा नदीतटे विप्रो भुञ्जीयाच्छूद्रभोजनम् ॥१४॥**

शूद्रका घरको घिउ, तेल र दुध तथा सखर हालेर तेलमा पकाइएका पक्वान्नहरु ब्राह्मणले नदी किनारामा गएर खान सक्दछ ।

**मद्यमांसरतं नित्यं नीचकर्मप्रवर्त्तकम् ।**
**तं शूद्रं वर्जयेद् विप्रः श्वपाकमिव दूरतः ॥१५॥**

दिनहुँ जाँडरक्सी खाने र निकृष्ट कर्मलाई प्रोत्साहन गर्ने शूद्रलाई ब्राह्मणले श्वपचलाईझैं गरी परैबाट त्याग्नू ।

**द्विजशुश्रूषणरतान् मद्यमांसविवर्जितान् ।**
**स्वकर्मनिरतान् नित्यं तांश्छूद्रान् न त्यजेद् द्विजः ॥१६॥**

द्विज-सेवामा लागेको, जाँडरक्सी र मासुबाट टाढै रही स्व-कर्ममा मग्न रहने शूद्रलाई द्विजले कहिल्यै नत्याग्नू ।

**अज्ञानाद्भुञ्जते विप्रा सूतके मृतकेऽपि वा ।**
**प्रायश्चित्तं कथं तेषां वर्णे वर्णे विनिर्दिशेत् ॥१७॥**

थाहा नपाई सूतकमा र जुठोमा खाना खाइए वर्ण अनुसार ब्राह्मणले गर्नुपर्ने प्रायश्चित कसरी निश्चित हुन्छ ? ।

**गायत्र्यष्टसहस्रेण शुद्धः स्याच्छूद्रसूतके ।**
**वैश्ये पञ्चसहस्रेण त्रिसहस्रेण क्षत्रिये ॥१८॥**

सूतक परेका शूद्रको घरमा खाए आठ हजार गायत्री जपले, वैश्यकोमा खाए पाँच हजार गायत्री जपले र क्षत्रियकोमा खाए तीन हजार गायत्री जप गर्नाले शुद्ध हुन्छ ।

**ब्राह्मणस्य यदा भुङ्क्ते प्राणायामेन शुध्यति ।
अथवा वामदेव्येन साम्ना चैकेन शुध्यति ॥१९॥**

ब्राह्मणकोमा खाए प्राणायाम मात्रैले शुद्ध हुन्छ अथवा एक
वामदेव्य साम मन्त्र जप्नाले शुद्ध हुन्छ ।

**शुष्कान्नं गोरसं स्नेहं शूद्रवेश्मन आगतम् ।
पक्वं विप्रगृहे पूतं भाज्यं तन्मनुरब्रवीत् ॥२०॥**

शुद्रको घरबाट लेराइएका सुखा अन्न, दूध तथा घिउतेल आदि चिल्ला वस्तु यदि ब्राह्मणका
घरमा पकाइएका छन् भने ती पवित्र र भोजनयोग्य हुन्छ भनी मनुले भनेका छन् ।

**आपत्काले तु विप्रेण भुक्तं शूद्रगृहे यदि ।
मनस्तापेन शुध्येत द्रुपदां वा शतं जपेत् ॥२१॥**

आपद्मा ब्राह्मणबाट शूद्रको घरमा भोजन गरिएमा मनमा पश्चाताप गर्नाले वा द्रुपदा
मन्त्रको सय पटक जप गर्नाले शुद्धी हुन्छ ।

**दासनापितगोपालकुलमित्रार्द्धसीरिणः ।
एते शूद्रेषु भोज्यान्ना यश्चात्मानं निवेदयेत् ॥२२॥**

दास, नाई, कुल-मित्र र अधियामा काम गर्ने किसान शुद्रमा गणना हुने भए पनि
यिनको तथा आफूलाई पूर्णरूपमा समर्पण गर्नेको अन्न पनि खान हुन्छ ।

**शूद्रकन्यासमुत्पन्नो ब्राह्मणेन तु संस्कृतः ।
संस्कृतस्तु भवेद्दासो ह्यसंस्कारैस्तु नापितः ॥२३॥**

ब्राह्मणले शूद्राबाट उत्पन्न गरेको सुसंस्कृत मानिस यदि संस्कार गरिएको भए
'दास ' र संस्कार नगरिएको भए 'नाई' हुन्छ ।

**क्षत्रियाच्छूद्रकन्यायां समुत्पन्नस्तु यः सुतः ।
स गोपाल इति ज्ञेयो भोज्यो विप्रैर्न संशयः ॥२४॥**

क्षत्रियले शूद्रकन्याबाट जन्माउने छोरो 'गोपाल' भनी जान्नू ।

उसका घरमा ब्राह्मणले निशङ्कोच भोजन गर्न सक्दछन् ।

**वैश्यकन्यासमुत्पन्नो ब्राह्मणेन तु संस्कृतः ।**
**आर्द्धिकश्च स तु ज्ञेयो भोज्यो विप्रैर्न संशयः ॥२५॥**

ब्राह्मणले वैश्याबाट जन्माएको र संस्कार गरिएको पुत्र 'आर्द्धिक' भनी जान्नू ।
उसका घरमा ब्राह्मणले निशङ्कोच भोजन गर्न सक्दछन् ।

**भाण्डस्थितमभोज्येषु जलं दधि घृतं पयः ।**
**अकामतस्तु यो भुङ्क्ते प्रायश्चित्तं कथं भवेत् ॥२६॥**

खान नहुनेको घरका भाँडामा रहेको जल, दही, घिउ र दूध नचाहेर
पनि खाने मानिसको प्रायश्चित के गरी हुन्छ ? ।

**ब्राह्मणः क्षत्रियो वैश्यः शूद्रो वाप्युपसर्पति ।**
**ब्रह्मकूर्चोपवासेन याज्यवर्णस्य निष्कृतिः ॥२७॥**

ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रमध्ये जोसुकै यस्तो खान पुग्दछ, तिमध्ये यज्ञका
अधिकारीको ब्रह्मकूर्च र उपवासले शुद्धि हुन्छ ।

**शूद्राणां नोपवासः स्याच्छूद्रो दानेन शुध्यति ।**
**ब्रह्मकूर्चमहोरात्रं श्वपाकमपि शोधयेत् ॥२८॥**

शूद्रले उपवास बस्न नहुने हुनाले दानले शुद्ध हुन्छ । एक दिनरातसम्म
पिइएको ब्रह्मकूर्चले श्वपाकलाई पनि शुद्ध पार्दछ ।

**गोमूत्रं गोमयं क्षीरं दधि सर्पिः कुशोदकम् ।**
**निर्दिष्टं पञ्चगव्यन्तु पवित्रं पापनाशनम् ॥२९॥**

गहुँत, गोबर, दूध, दही, घिउ र कुश-पानीलाई पापनाशक पवित्र पञ्चगव्य बताइएको छ ।

**गोमूत्रं कृष्णवर्णायाः श्वेताया गोमयं हरेत् ।**
**पयश्च ताम्रवर्णाया रक्ताया गृह्यते दधि ॥३०॥**

कालो गाईको गहुँत, सेतो गाईको गोबर, ताम्रवर्णको गाईको दूध, रातो गाईको दही लिनू ।

**कपिलाया घृतं ग्राह्यं सर्वं कापिलमेव वा ।**
**गोमूत्रस्य पलं दद्याद्दध्नस्त्रिपलमुच्यते ॥३१॥**
**आज्यस्यैकपलं दद्यादङ्गुष्ठार्द्धन्तु गोमयम् ।**
**क्षीरं सप्तपलं दद्यात् पलमेकं कुशोदकम् ॥३२॥**

कैली गाईको घिउ लिनू वा सबैथोक कैली गाईको लिनू । गहुँत एक पल (आठ तोला), दही तीन पल बताइएको छ भने एक पल घिउ, बूढी औंलाको आधा गोबर, सात पल दूध र एक पल कुशपानी मिलाउनू ।

**गायत्र्या गृह्य गोमूत्रं गन्धद्वारेति गोमयम् ।**
**आप्यायस्वेति च क्षीरं दधिक्राव्णेति वै दधि ॥३३॥**

गायत्री मन्त्रले गहुँत लिएर, 'गन्धद्वारां...' मन्त्रले गोबर लिएर, 'आप्यायस्व समेतु ते..." मन्त्रले दूध लिएर, 'दधिक्राब्णो अकारिषम्...' मन्त्रले दही लिएर... ।

**तेजोसि शुक्रमित्याज्यं देवस्य त्वा कुशोदकम् ।**
**पञ्चगव्यमृचा पूतं स्थापयेदग्निसन्निधौ ॥३४॥**

'तेजोऽसि शुक्रम्...' मन्त्रले घिउ लिएर तथा 'देवस्य त्वा सवितुः...' मन्त्रले कुशपानी लिएर मन्त्रले पवित्र पञ्चगव्यलाई अग्निका नजिकै स्थापना गर्नू ।

**आपो हिष्ठेति चालोडच मानस्तोकेति मन्त्रयेत् ।**
**सप्तावरास्तु ये दर्भा अच्छिन्नाग्राः शुकत्विषः ॥३५॥**

'आपोहिष्ठा मयोभुवः...' मन्त्रले पञ्चगव्यलाई हातका औंलाले चलाएर 'मानस्तोके तनये मान...' मन्त्रले अभिमन्त्रित गर्नू । नकाटिएका टुप्पा भएका सुँगाको चुच्चो समान हरिया देखिने कममा पनि सात वटा कुशले... ।

**एभिरुद्धृत्य होतव्यं पञ्चगव्यं यथाविधि ।**
**इरावती इदं विष्णुर्मानस्ताके च शंवती ॥३६॥**

पञ्चगव्यलाई उठाएर विधिपूर्वक होम गर्नु पर्दछ । 'इरावती..', 'इदं विष्णुर्विचक्रमे...',

'मानस्तोके तनये मान...' तथा 'शंन इन्द्राग्नि' आदि 'शंवती' भनिने मन्त्रले... ।

**एतैरुद्धृत्य होतव्यं हुतशेषं स्वयं पिबेत् ।**
**आलोड्य प्रणवेनैव निर्म्मथ्य प्रणवेन तु ॥**
**उद्धृत्य प्रणवेनैव पिबेच्च प्रणवेन तु ॥३७॥**

उठाएर होम गर्नू र होमगरी बाँकी बचेको पञ्चगव्य आफैंले खानू । ॐ भन्दै सबैथोक मिसाउनू, ॐ भन्दै हातले चलाउनू, ॐ भन्दै उठाउनू र ॐ भन्दै पिउनू ।

**यत्त्वगस्थिगतं पापं देहे तिष्ठति देहिनाम् ।**
**ब्रह्मकूर्चो दहेत् सर्वं यथैवाग्निरिवेन्धनम् ॥३८॥**

शरीरधारीका शरीरमा जुन पाप छाला र हाडभित्र पसेर रहेको हुन्छ, त्यो सबै ब्रह्मकूर्च ( कुशपानी)ले यसरी जलाइदिन्छ जसरी अग्निले दाउरा जलाउँदछ ।

**पवित्रं त्रिषु लोकेषु देवताभिरधिष्ठितम् ।**
**वरुणश्चैव गोमूत्रे गोमये हव्यवाहनः ॥**
**दध्नि वायुः समुद्दिष्टः सोमः क्षीरे घृते रविः ॥३९॥**

तीनै लोकमा पवित्र गर्ने भएको पञ्चगव्यमा देवताको वास हुन्छ । गहुँतमा वरुण, गोबरमा अग्नि, दहीमा वायु, दूधमा चन्द्रमा र घिउमा सूर्य देवताको वास हुन्छ ।

**पिबतः पतितं तोयं भाजने मुखनिःसृतम् ।**
**अपेयं तद्विजानीयाद् भुक्त्वा चान्द्रायणं चरेत् ॥४०॥**

पिउँदा मुखबाट खसी भाँडामा जल परे त्यो जल पिउन अयोग्य सम्झनू, पिए चान्द्रायण व्रत गर्नू ।

**कूपे च पतितं दृष्ट्वा श्वशृगालौ च मर्कटम् ।**
**अस्थि चर्म्मादि पतितं पीत्वामेध्या अपो द्विजः ॥४१॥**

कुवामा खसेका कुकुर, स्याल, बाँदर वा हाड, छाला आदि देखेर पनि पानी खाएमा निम्न प्रायश्चित गर्नू ।

**नारन्तु कूपे काकञ्च विड्वराहखरोष्ट्रकम् ।**
**गावयं सौप्रतीकञ्च मायूरं खमड्गकं तथा ॥४२॥**

यदि कुवामा मानिसको, कागको, सुँगुरको, गधाको, ऊँछको, नील गाईको,
हातीको, मुजुरको, गैंडाको ...।

**वैयाघ्रमार्क्षं सैंहं वा कुणपं यदि मज्जति ।**
**तडागस्याथ दुष्टस्य पीतं स्यादुदकं यदि ॥४३॥**
**प्रायश्चित्तं भवेत् पुंसः क्रमेणैतेन सर्वशः ।**
**विप्रः शुध्येत्त्रिरात्रेण क्षत्रियस्तु दिनद्वयात् ॥**
**एकाहेन तु वैश्यस्तु शूद्रो नक्तेन शुध्यति ॥४४॥**

बाघको, भालुको वा सिँहको लाश परेको छ र त्यस्तोपानी पिइन्छ भने वा कुनै पनि तरिकाले अपवित्र भएको तलाउको पानी पिइयो भने यसरी मानिसको प्रायश्चित हुन्छ । विप्र तीन रातमा (व्रतले), क्षत्रिय दुई दिनमा, वैश्य एक दिनमा र शुद्र एक रातमा शुद्ध हुन्छ ।

**अपचस्य च भुक्त्वान्नं द्विजश्चान्द्रायणञ्चरेत् ॥४५॥**

अरुका लागि कहिल्यै भोजन नपकाउने तथा अर्काले पकाएको खानमा नै
मस्त हुनेको र अपचको अन्न खाई द्विजले चान्द्रायण व्रत गर्नू ।

**अपचस्य च यद्दानं दातुश्चास्य कुतः फलम् ।**
**दाता प्रतिग्रहीता च द्वौ तौ निरयगामिनौ ॥४६॥**

अपचलाई दिइने दानले दातालाई कहाँबाट फल मिल्नू । यसबाट त
लिनेदिने दुवै नरकमा पो पर्दछन् ।

**गृहीत्वाग्निं समारोप्य पञ्चयज्ञान्न वर्त्तयेत् ।**
**परपाकनिवृत्तोऽसौ मुनिभिः परिकीर्त्तितः ॥४७॥**

व्रत लिई अग्निको आधान गरेर पनि पञ्च महायज्ञ नगर्नेलाई मुनिहरुले
देव-पितृ-अतिथि-भूत आदिलाई नपकाउने व्यक्ति भनेका छन् ।

**पञ्चयज्ञं स्वयं कृत्वा परान्नेनोपजीवति ।**

**सततं प्रातरुत्थाय परपाकरतो हि सः ॥४८॥**

जसले दिनहुँ बिहान उठेर आफैंले पञ्च महायज्ञ गरेर पनि अर्काले
पकाएको अन्न खाएर बाँच्छ उसलाई परपाकरत भनिन्छ ।

**गृहस्थधर्मं यो विप्रो ददाति परिवर्ज्जितः ।**
**ऋषिभिर्धर्मतत्वज्ञैरपचः परिकीर्त्तितः ॥४९॥**

गृहस्थ धर्मबाट वर्जित जो ब्राह्मण दान दिन्छ, धर्मको तत्व जानेका ऋषिहरुले
त्यसलाई अपच भनेका छन् ।

**युगे युगे च ये धर्मास्तेषु धर्मेषु ये द्विजाः ।**
**तेषां निन्दा न कर्त्तव्या युगरूपा हि ब्राह्मणाः ॥५०॥**

प्रत्येक युगमा जुन धर्म हुन्छ र त्यस अनुसारका जुन ब्राह्मण रहेका हुन्छन् तिनको
निन्दा नगर्नू किनकि ब्राह्मण युग अनुरुपका हुन्छन् ।

**हुङ्कारं ब्राह्मणस्योक्त्वा त्वङ्कारञ्च गरीयसः ।**
**स्नात्वा तिष्ठन्नहःशेषमभिवाद्य प्रसादयेत् ॥५१॥**

ब्राह्मणलाई ललकारेर वा आफूभन्दा ठूलालाई तँ भनेर बोले नुहाई बाँकी
सारा दिन बसेर अभिवादन गरी ब्राह्मणलाई प्रसन्न पार्नू ।

**ताडयित्वा तृणेनापि कण्ठे वा बध्यवाससा ।**
**विवादेनापि निर्जित्य प्रणिपत्य प्रसादयेत् ॥५२॥**

ब्राह्मणलाई छेस्काले मात्रै हिर्काए पनि, घाँटीमा कपडाले बाँधेर घिच्याए
वा वादविवादमा जिते पनि तिनको पाऊ परी प्रसन्न पार्नू ।

**अवगूर्य्य त्वहोरात्रं त्रिरात्रं क्षितिपातने ।**
**अतिकृच्छ्रञ्च रुधिरे कृच्छ्रमन्तरशोणिते ॥५३॥**

ब्राह्मणलाई धम्क्याएर एक दिन एक रात तथा जमिनमा लडाए तीन रातको व्रत गर्नू ।
रगत निकाले अतिकृच्छ्र गर्नू र रगत जमे कृच्छ्र व्रत गर्नू ।

**नवाहमतिकृच्छ्रं स्यात् पाणिपूरान्नभोजनम् ।**
**त्रिरात्रमुपवासः स्याद‌तिकृच्छ्रः स उच्यते ॥५४॥**

नौ दिनसम्म मुठीभरी अन्नको भोजन गरिनेलाई अतिकृच्छ्र भनिन्छ ।
रातको जुन व्रत हुन्छ त्यसलाई कृच्छ्र भनिन्छ ।

**सर्वेषामेव पापानां सङ्करे समुपस्थिते ।**
**शतसाहस्रभ्यस्ता गायत्री शोधनं परम् ॥५५॥**

सबै पापको सम्मिश्रण भए एक लाख पटक गायत्री जप परम शुद्धिदायक हुन्छ ।

॥ इति श्रीपाराशरे धर्मशास्त्रे एकादशोऽध्यायः ॥११॥
मोहनप्रसाद सापकोटाबाट श्रीपराशरस्मृतिको एघारौँ अध्याय
नेपालीमा भावानुवाद गरेर सकियो ।

आदितः श्लोकानां समष्टयङ्काः-४७०+५५=५२५
शुरुदेखिको श्लोसंख्याः ४७०+५५=५२५

## ॥ अथ द्वादशोऽध्यायः ॥
## ॥ तत्रादौ पुनः संस्कारादिप्रायश्चित्तवर्णनम् ॥

**दुःस्वप्नं यदि पश्येत्तु वान्ते वा क्षुरकर्मणि ।**
**मैथुने प्रेतधूमे च स्नानमेव विधीयते ॥१॥**

खराब सपना देखे, वमन भए वा कपालआदि खौरे, सम्भोग पछि र
लाशको धुवाँले छोए नुहाउने मात्र विधान छ ।

**अज्ञानात् प्राश्य विण्मूत्रं सुरां वा पिबते यदि ।**
**पुनः संस्कारमर्हन्ति त्रयो वर्णा द्विजातयः ॥२॥**

अज्ञानमा मलमुत्र र मदिरा खाने तीनैवर्णका द्विजहरु पुनः संस्कारका योग्य हुन्छन् ।

**अजिनं मेखला दण्डो भैक्षाचर्य्या व्रतानि च ।**

**निवर्त्तन्ते द्विजातीनां पुनःसंस्कारकर्मणि ॥३॥**

द्विजातिको पुनः संस्कारको कर्ममा मृगचर्म, कन्धनी, दण्ड, भिक्षाकर्म र व्रत फेरी गर्दैन ।

**स्त्रीशूद्रस्य शुद्ध्यर्थं प्राजापत्यं विधीयते ।
पञ्चगव्यं ततः कृत्वा स्नात्वा पीत्वा विशुध्यति ॥४॥**

स्त्री र शूद्रको शुद्धताका लागि प्राजापत्य व्रत गर्नू र
त्यसपछि नुहाएर पञ्चगव्य पिउनू, शुद्ध हुन्छ ।

**जलाग्निपतने चैव प्रव्रज्यानाशकेषु च ।
प्रत्यवसितमेतेषां कथं शुद्धिर्विधीयते ॥५॥**

पानीका कारणले नित्य कर्म गर्न बाधा भएमा वा घरमा आधान गरिएको अग्नि निभेमा,
लिइएको सन्यासधर्म नष्ट भएमा र कुनै व्रत भङ्ग भएमा वर्णको शुद्धि कसरी हुन्छ ? ।

**प्राजापत्यद्वयेनापि तीर्थाभिगमनेन च ।
वृषैकादशदानेन वर्णाः शुध्यन्ति ते त्रयः ॥६॥**

दुई वटा प्राजापत्य व्रत गर्नाले , तीर्थमा जानाले वा एघार वटा साँढे
दान गर्नाले तीनै वर्ण शुद्ध हुन्छन् ।

**ब्राह्मणस्य प्रवक्ष्यामि वनं गत्वा चतुष्पथम् ।
सशिखं वपनं कृत्वा प्राजापत्यत्रयञ्चरेत् ॥७॥**

ब्राह्मणका लागि शुद्धिको उपाय बताउनु पर्दा तिनले बनमा गएर चौबाटोमा
टुपी समेत खौरी तीन वटा प्राजापत्य व्रत गर्नू ।

**गोद्वयं दक्षिणां दद्याच्छुद्धिं स्वायम्भुवोऽब्रवीत् ।
मुच्यते तेन पापेन ब्राह्मणत्वञ्च गच्छति ॥८॥**

दुईवटा गाईहरु दान गर्नू । यसरी उसले पापबाट मुक्त भई पुनः ब्राह्मणत्व प्राप्त गर्दछ ।
यो स्वयम्भू मनुको कथन हो ।

**स्नानानि पञ्च पुण्यानि कीर्त्तितानि मनीषिभिः ।**
**आग्नेयं वारुणं ब्राह्म वायव्यं दिव्यमेव च ॥९॥**

विद्वानहरुले आग्नेय, वारुण, ब्राह्म, वायव्य र दिव्य गरी पाँच
प्रकारका पवित्र स्नान बताएका छन् ।

**आग्नेयं भस्मना स्नानमवगाह्य तु वारुणम् ।**
**आपो हिष्ठेति च ब्राह्मं वायव्यं रजसा स्मृतम् ॥१०॥**

खरानीले गर्ने आग्नेय, पानीमा उत्रिएर गर्ने वारुण, 'आपो हिष्ठा' आदि वेदमन्त्रले गरिने
ब्राह्म र गाईको खुरको धूलोले गरिने स्नानलाई वायव्य स्नान भनिन्छ ।

**यत्तु सातपवर्षेण स्नानं तद्दिव्यमुच्यते ।**
**तत्र स्नाने तु गङ्गायां स्नातो भवति मानवः ॥११॥**

वर्षामा घामपानीमा गरिने स्नानलाई दिव्य स्नान भनिन्छ र यसबेला
गरिने स्नान गङ्गा-स्नान गरेको समान हुन्छ ।

**स्नानार्थं विप्रमायान्तं देवाः पितृगणैः सह ।**
**वायुभूता हि गच्छन्ति तृषार्त्ताः सलिलार्थिनः ॥१२॥**

तिर्खाएका देवताहरु पितृका साथ वायु रुप लिएर स्नानका लागि
आउन लागेका ब्राह्मणका पछिपछि लाग्दछन् ।

**निराशास्ते निवर्त्तन्ते वस्त्रनिष्पीडने कृते ।**
**तस्मान्न पीडयेद्वस्त्रमकृत्वा पितृतर्पणम् ॥१३॥**

नुहाएका लुगा निचोरे पछि तिनीहरु निराश भई फर्कन्छन् । यसैले पितृलाई तर्पण
नदिई नुहाएका लुगा ननिचोर्नू ।
(विशेषतः श्राद्धका दिन श्राद्धकर्ताले नुहाएका लुगा श्राद्ध नसकिई नधुनू, नपखाल्नू) ।

**विधुनोति हि यः केशान् स्नातः प्रस्रवतो द्विजः ।**
**आचामेद्वा जलस्थोऽपि स वाह्यः पितृदैवतैः ॥१४॥**
जो द्विज नुहाएर जल चुहिँदै गरेको कपाल झटकार्दछ वा पानीभित्र रहेर आचमन

(कुल्ला) गर्दछ उसलाई पितृ र देवताले बहिष्कार गर्दछन् ।

**शिरः प्रावृत्य कण्ठं वा मुक्तकच्छशिखोऽपि वा ।**
**विना यज्ञोपवीतेन आचान्तोऽत्यशुचिर्भवेत् ॥१५॥**

जो टाउको वा गला लुगाले ढाकेर, कछाड वा टुपी खोलेर र जनै नलगाई
आचमन गर्दछ उ अपवित्र हुन्छ ।

**जले स्थलस्थो नाचामेज्जलस्थश्च वहि:स्थले ।**
**उभे स्पृष्ट्वा समाचान्त उभयत्र शुचिर्भवेत् ॥१६॥**

जमिनमा बसी पानीमा  र पानीमा बसी जमिनमा आचमन नगर्नू ।
जो दुवै छोई आचमन गर्दछ उ दुवैस्थानमा पवित्र हुन्छ ।

**स्नात्वा पीत्वा क्षुते सुप्ते भुक्ते रथ्योपसर्पणे ।**
**आचान्तः पुनराचामेद्वासो विपरिधाय च ॥१७॥**

आचमन पछि नुहाए, पानी पिए, हाच्छिउँ गरे, सुते, खाए वा
सडकतिर घुमे वा लुगा फेरे  फेरी आचमन गर्नू ।

**क्षुते निष्ठीवते चैव दन्तोच्छिष्टे तथानृते ।**
**पतितानाञ्च सम्भाषे दक्षिणं श्रवणं स्पृशेत् ॥१८॥**

हाच्छिउँ गरेर, थुकेर, दातमा अडकिएका जुठो निकालेर, झुटो बोलेर र
निम्न वर्णसँग कुराकानी गरेर आफ्नो दाहिने कान छुनू ।

**ब्रह्मा विष्णुश्च रुद्रश्च सोमः सूर्य्योऽनिलस्तथा ।**
**ते सर्वे ह्यपि तिष्ठन्ति कर्णे विप्रस्य दक्षिणे ॥१९॥**

ब्रह्मा, विष्णु, रुद्र, सोम, सूर्य र वायु यी सबै नै ब्राह्मणका दाहिने कानमा निवास गर्दछन् ।

**दिवाकरकरैः पूतं दिवास्नानं प्रशस्यते ।**
**अप्रशस्तं निशि स्नानं राहोरन्यत्र दर्शनात् ॥२०॥**

सूर्यका किरणले पवित्र हुने दिनको स्नान प्रशंसनीय छ ।

ग्रहण-स्नान बाहेकको रातको स्नान प्रशंसनीय छैन ।

**मरुतो वसवो रुद्रा आदित्याश्चाधिदेवताः ।**
**सर्वे सोमे विलीयन्ते तस्मात् स्नानन्तु तद्ग्रहे ॥२१॥**

उनन्चास वायु, आठ वसु, एघार रुद्र, बाऱ्ह सूर्य र अरु देवताहरु पनि ग्रहणका समयमा चन्द्रमामा बिलिन हुन्छन् त्यसैले चन्द्रग्रहणमा स्नानको विधान गरिएको छ ।

**खलयज्ञे विवाहे च संक्रान्तौ ग्रहणेषु च ।**
**शर्वर्य्यां दानमेतेषु नान्यत्रेति विनिश्चयः ॥२२॥**

खेतको खलोको यज्ञमा, विवाहमा, संक्रान्तिमा र ग्रहणमा रातको दानको विधि भएपनि अन्य कुनै कार्यमा यस्तो विधान नभएको कुरा निश्चित हो ।

**पुत्रजन्मनि यज्ञे च तथा चात्ययकर्मणि ।**
**राहोश्च दर्शने दानं प्रशस्तं नान्यथा निशि ॥२३॥**

छोरो जन्मँदा, यज्ञमा, मृतक कर्ममा र ग्रहणमा रातको दान उत्तम मानिन्छ अन्यत्र होइन ।

**महानिशा तु विज्ञेया मध्यस्थप्रहरद्वयम् ।**
**प्रदोषपश्चिमौ यामौ दिनवत् स्नानमाचरेत् ॥२४॥**

रातका बीचका दुई प्रहरलाई महानिशा मानिन्छ । बाँकी दुई प्रहर प्रदोष र पश्चिम याम भनिन्छन् । तिनमा दिनको जसरी नै नुहाउनू ।

**चैत्यवृक्षश्चितिस्थश्च चण्डाल सोमविक्रयी ।**
**एतांस्तु ब्राह्मणः स्पृष्ट्वा सवासा जलमाविशेत् ॥२५॥**

स्तुप, चौतारो तथा चितास्थलमा रहेको रुख, चाण्डाल र सोमरस बिक्री गर्नेलाई छोए ब्राह्मणले सवस्त्र जलमा पसी नुहाउनू ।

**अस्थिसञ्चयनात् पूर्वं रुदित्वा स्नानमाचरेत् ।**
**अन्तर्दशाहे विप्रस्य ह्यूर्ध्वमाचमनं स्मृतम् ॥२६॥**

अस्थि सञ्चयन गर्नुपूर्व रोएपछि नुहाउनू । दश दिनको किरियाकर्ममा
ब्राह्मणका लागि उक्त कर्म पछि आचमनको विधान गरिएको छ ।

**सर्वं गङ्गासमं तोयं राहुग्रस्ते दिवाकरे ।**
**सोमग्रहे तथैवोक्तं स्नानदानादिकर्मसु ॥२७॥**

सूर्यग्रहणमा वा चन्द्रग्रहणमा गरिने स्नान, दान आदि
कर्ममा सबैतिरको जल गङ्गाजल समान हुन्छ ।

**कुशपूतन्तु यत्स्नानं कुशेनोपस्पृशेद् द्विजः ।**
**कुशेनोद्धृततोयं यत् सोमपानसमं स्मृतम् ॥२८॥**

कुशले पवित्र गरिएको जलले गरिने स्नान पवित्र हुने हुनाले द्विजले त्यस्तो जलले
स्नान गर्नू । कुशले उठाएर पिइने जल सोमपान समान मानिन्छ ।

**अग्निकार्य्यात् परिभ्रष्टाः सन्ध्योपासनवर्जिताः ।**
**वेदञ्चैवानधीयानाः सर्वे ते वृषलाः स्मृताः ॥२९॥**

जो यज्ञकर्मबाट भ्रष्ट भएका छन्, जो सन्ध्याकालीन उपासना हीन छन् र
जो वेदाध्ययन गर्दैनन् ति सबै 'वृषल' भनिन्छन् ।

**तस्माद् वृषलभीतेन ब्राह्मणेन विशेषतः ।**
**अध्येतव्योऽप्येकदेशो यदि सर्वं न शक्यते ॥३०॥**

यसकारण वृषल हुने डरले द्विजले त्यसमा पनि विशेषतः ब्राह्मणले सबै वेद
पढ्नु नसके पनि त्यसको एक अंश अवश्य पढ्नु पर्दछ ।

**शूद्रान्नरसपुष्टस्याप्यधीयानस्य नित्यशः ।**
**जपतो जुह्वतो वापि गतिरुक्ता न विद्यते ॥३१॥**

नित्यवेद पढ्ने तथा जप र होम गर्ने भएपनि शूद्रको अन्नको
रसले पेट भर्ने द्विजको उत्तम गति हुँदैन ।

**शूद्रान्नं शूद्रसम्पर्कः शूद्रेण तु सहासनम् ।**

**शुद्राज्ज्ञानागमश्चापि ज्वलन्तमपि पातयेत् ॥३२॥**

शूद्रको अन्न, उसँगको सम्पर्क, उठबस तथा उसबाट ज्ञान लिने जस्ता
कार्यले प्रतापीलाई पनि पतित बनाउँछ ।

**यः शूद्र्या पाचयेन्नित्यं शूद्री च गृहमेधिनी ।**
**वर्जितः पितृदेवेभ्यो रौरवं याति स द्विजः ॥३३॥**

जसले शूद्राबाट भोजन पकाउँदछ वा शूद्रालाई पत्नी बनाएको छ पितृ
र देवताले त्याग गरेको त्यो द्विज रौरव नरकमा जान्छ ।

**मृतसूतकपुष्टाङ्गो द्विजः शूद्रान्नभोजने ।**
**अहं तां न विजानामि कां कां योनिं गमिष्यति ॥३४॥**

जुठोसूतकको भोजनले मोटाएका र र शूद्रको अन्न खाने द्विजहरुका बारेमा
म भन्न सक्दिन कि ती कुन कुन योनीमा जान्छन् ।

**गृध्रो द्वादश जन्मानि दश जन्मानि शूकरः ।**
**श्वयोनौ सप्त जन्मानि इत्येवं मनुरब्रवीत् ॥३५॥**

बाऱ्ह जन्मसम्म गिद्ध, दश जन्मसम्म सुँगुर र सात जन्मसम्म कुकुरको
योनीमा जान्छन्-यस्तो मनुले भनेका छन् ।

**दक्षिणार्थं  तु यो विप्रः शूद्रस्य जुहुयाद्धविः ।**
**ब्राह्मणस्तु भवेच्छूद्रः शुद्रस्तु ब्राह्मणो भवेत् ॥३६॥**

पैसाका लागि जुन ब्राह्मणले शूद्रको होम गराउँदछ त्यो ब्राह्मण शूद्र हुन्छ र शुद्र ब्राह्मण हुन्छ ।

**मौनव्रतं समाश्रित्य आसीनो न वदेद् द्विजः ।**
**भुञ्जानो हि वदेद्यस्तु तदन्नं परिवर्जयेत् ॥३७॥**

मौनव्रती द्विजले नबोल्नू, जो भोजन गर्दा बोल्दछ उसले खाइरहेको अन्न त्याग दिनू ।

**अर्द्धे भुक्ते तु यो विप्रस्तस्मिन् पात्रे जलं पिबेत् ।**

**हतं दैवञ्च पित्र्यञ्च आत्मानञ्चोपघातयेत् ॥३८॥**

जुन ब्राह्मण आधा खाना खाएको अवस्थामा त्यही भाँडामा पानी पिउँदछ
उसले गरेका देवपितृकर्म नष्ट भई उ विनाशमा प्राप्त हुन्छ ।

**भुञ्जानेषु तु विप्रेषु योऽग्रे पात्रं विमुञ्चति ।**
**स मूढः स च पापिष्ठो ब्रह्मघ्नः स खलूच्यते ॥३९॥**

जुन ब्राह्मण अरु ब्राह्मणले खाँदाखाँदै आफू अगाडीको थाल छोडेर उठ्दछ उ मूर्ख र
महापापी हो तथा उसलाई निश्चय नै ब्रह्मघाती भनिन्छ ।

**भाजनेषु च तिष्ठत्सु स्वस्ति कुर्वन्ति ये द्विजाः ।**
**न देवास्तृप्तिमायान्ति निराशाः पितरस्तथा ॥४०॥**

जुन ब्राह्मण अरु ब्राह्मणले खाँदाखाँदै हारबाट उठेर स्वस्ति गर्न थाल्छ
उसका देवता तृप्त हुँदैनन् र पितृ निराश हुन्छन् ।

**गृहस्थस्तु दयायुक्तो धर्ममेवानुचिन्तयेत् ।**
**पोष्यवर्गार्थसिद्ध्यर्थं न्यायवर्त्ती सुबुद्धिमान् ॥४१॥**

दयालु र न्यायशाली उत्तम बुद्धिको गृहस्थले आफूमा आश्रितजनको
प्रयोजनको सिद्धिको लागि सधैं धर्मकै चिन्तन गर्नू ।

**न्यायोपार्जितवित्तेन कर्त्तव्यं ह्यात्मरक्षणम् ।**
**अन्यायेन तु यो जीवेत् सर्वकर्मबहिष्कृतः ॥४२॥**

इमान्दारीले कमाएको धनले नै आफ्नु रक्षा गर्नू । जो बेइमानीको धनले जीवन
चलाउँदछ उ सबै करणीय कर्मबाट बाहिरिन्छ ।

**अग्निचित् कपिला सत्री राजा भिक्षुर्महोदधिः ।**
**दृष्टमात्राः पुनन्त्येते तस्मात् पश्येत्तु नित्यशः ॥४३॥**

होम गर्ने व्यक्ति, कैली गाई, सत्र यज्ञ गर्ने व्यक्ति, राजा, भिक्षुक र महासागर-यी कुरा
देखिए मात्र पनि यिनले पवित्र गर्ने हुनाले यिनको नित्य दर्शन गर्नू ।

**अरणिं कृष्णमार्जारं चन्दनं सुमणिं घृतम् ।**
**तिलान् कृष्णाजिनं छागं गृहे चैतानि रक्षयेत् ॥४४॥**

अरणि, कालो बिरालो, चन्दन, उत्तम मणि, घिउ, तिल, कालो
मृगको छाला र बोका-यि कुरा घरमा सुरक्षित राख्नू ।

**गवां शतं सैकवृषं यत्र तिष्ठत्ययन्त्रितम् ।**
**तत्क्षेत्रं दशगुणितं गोचर्म परिकीर्त्तितम् ॥४५॥**

जहाँ एउटा साँढे सहित सय गाई नबाँधिकन उभिन्छन् त्यती जमिनको दश गुणा
जमिनलाई गोचर्म भनिन्छ ।

**ब्रह्महत्यादिभिर्मर्त्यो मनोवाक्कायकर्मजैः ।**
**एतद्गोचर्मदानेन मुच्यते सर्वकिल्विषैः ॥४६॥**

मन, वचन र शरीरले उत्पन्न हुने ब्रह्महत्या आदि सबै प्रकारका पापबाट
मानिस गोचर्म भूमि दानले मुक्त हुन्छ ।

**कुटुम्बिने दरिद्राय श्रोत्रियाय विशेषतः ।**
**यद्दानं दीयते तस्मै तदायुर्वृद्धिकारकम् ॥४७॥**

कुटुम्ब हुनेलाई, दरिद्रलाई र विशेषतः वेदपाठी ब्राह्मणलाई
जुन दान दिइन्छ त्यसले आयु बढाउँदछ ।

**वापीकूपतडागाद्यैर्वाजपेयशतैर्मखैः ।**
**गवां कोटिप्रदानेन भूमिहर्ता न शुध्यति ॥४८॥**

अर्काको जमिन खोस्ने मानिस पोखरी, कुवा तलाउ खनाएर वा सय वटा
वाजपेय यज्ञ गरेर वा एक करोड गाई दान गरेर पनि शुद्ध हुँदैन ।

**आशोडशदिनादर्वाक् स्नानमेव रजस्वला ।**
**अत ऊर्द्ध्वं त्रिरात्रं स्यादुशना मुनिरब्रवीत् ॥४९॥**

उशना ऋषिका अनुसार ऋतुस्नान पछि सोह्र दिनभित्र रगत देखिए रजस्वलाले नुहाउनू । त्यसपछि फेरी आए त तीन दिनको अशुद्धि हुन्छ ।

**युगं युगद्वयश्चैव त्रियुगञ्च चतुर्युगम् ।**
**चाण्डालसूतिकोदक्यापतितानामधः क्रमात् ॥५०॥**

चण्डाल, सुत्केरी, रजस्वला र पतितालाई छुने द्विज क्रमशः दुई, चार, छ र आठ दिन अपवित्र रहन्छ ।

**ततः सन्निधिमात्रेण सचैलं स्नानमाचरेत् ।**
**स्नात्वावलोकयेत् सूर्य्यमज्ञानात् स्पृशते यदि ॥५१॥**

तिनका समिपमा रहनेले पनि सवस्त्र नुहाउनू । यदि अनजानमा तिनलाई छोइए नुहाएर सूर्यको दर्शन गर्नू ।

**वापीकूपतडागेषु ब्राह्मणो ज्ञानदुर्बलः ।**
**तोयं पिबति वक्त्रेण श्वयोनौ जायते ध्रुवम् ॥५२॥**

कुवा, पँधेरो, तलाउ आदिमा मुखैले पानी पिउने ज्ञानमा कमजोर ब ्राह्मण निश्चय नै कुकुर भएर जन्मन्छ ।

**यस्तु क्रुद्धः पुमान् भार्य्यां प्रतिज्ञायाप्यगम्यताम् ।**
**पुनरिच्छति ताञ्चन्तुं विप्रमध्ये तु श्रावयेत् ॥५३॥**

रिसाएका बेला “तँ मेरा लागि सँगै सुत्न लायक छैनस्” भनी त्यागिएकी पत्नीसँग फेरी जान चाहेमा यो कुरा ब्राह्मणका बीचमा घोषणा गर्नू ।

**श्रान्तः क्रुद्धस्तमोऽन्धो वा क्षुत्पिपासाभयार्द्दितः ।**
**दानं पुण्यमकृत्वा च प्रायश्चित्तं दिनत्रयम् ॥५४॥**

थाकेको, रिसाएको, अज्ञानले अन्धो भएको तथा भोकप्यास र भयले पीडित मानिस यदि दान र पुण्य गर्न पाउँदैन भने उसले निम्न तीन दिने प्रायश्चित गर्नू ।

**उपस्पृशेत् त्रिषवणं महानद्युपसङ्गमे ।**

**चीर्णान्ते चैव गां दद्याद् ब्राह्मणान् भोजयेद्दश ॥५५॥**

उसले तीनै समय महानदीका सङ्गममा नुहाउनू, व्रत पूरा गरेपछि गाईदान गरी दश ब्राह्मणलाई भोजन गराउनू ।

**दुराचारस्य विप्रस्य निषिद्धाचरणस्य च ।**
**अन्नं भुक्त्वा द्विजः कुर्य्याद्दिनमेकमभोजनम् ॥५६॥**

दुराचारी र निषिद्ध आचरण गर्ने ब्राह्मणको भोजन खाएपछि द्विजले एकदिन भोजन नगर्नू ।

**सदाचारस्य विप्रस्य तथा वेदान्तवादिनः ।**
**भुक्त्वान्नं मुच्यते पापादहोरात्रन्तु वै नरः ॥५७॥**

सदाचारी र वेदान्तवादी ब्राह्मणको अन्न खाएपछि मानिस एक दिनरातमा पापबाट मुक्त हुन्छ ।

**उद्धर्वोच्छिष्टमधोच्छिष्टमन्तरीक्षमृतौ तथा ।**
**कृच्छ्रत्रयं प्रकुर्वीत आशौचमरणे तथा ॥५८॥**

शरीरका माथिका अङ्ग र तलका अङ्ग अपवित्र हुँदा एवं अन्तरीक्षको मरण र आशौचमा मृत्यु हुँदा तीन कृच्छ्र गर्नू ।

**कृच्छ्रे देव्ययुतश्चैव प्राणयामशतत्रयम् ।**
**पुण्यतीर्थे नार्द्रशीरः स्नानं द्वादशसंख्यया ॥**
**द्वियोजनं तीर्थयात्रा कृच्छ्रमेवं प्रकल्पितम् ॥५९॥**

कृच्छ्र व्रतमा दश हजार गायत्रीको जप, तीन सय चोटी प्राणायाम, बाह्र पवित्र तीर्थमा टाउको नभिजाई गरिने स्नान र दुई योजनको तीर्थयात्रा गर्नुपर्दछ । यसरी एक कृच्छ्र बन्दछ ।

**गृहस्थः कामतः कुर्य्याद्रेतसः सेचनं भुवि ।**
**सहस्रन्तु जपेद्देव्याः प्राणायामैस्त्रिभिः सह ॥६०॥**

यदि गृहस्थले काममोहित भई जमिनमा वीर्य खसाल्दछ भने तीन सय पटक प्राणायामका साथमा एक हजार पटक गायत्री जप गर्नू ।

**चातुर्वैद्योपपन्नस्तु विधिवद् ब्रह्मघातके ।**
**समुद्रसेतुगमनप्रायश्चित्तं विनिर्दिशेत् ॥६१॥**

चारै वेदका ज्ञाता ब्राह्मणले ब्राह्मणको हत्या गर्नेलाई समुद्रमा बनेको पुल (रामेश्वर) जाने प्रायश्चितको विधि बताऊन् ।

**सेतुबन्धपथे भिक्षां चातुर्वर्ण्यात् समाचरेत् ।**
**वर्जयित्वा विकर्मस्थांश्छत्रोपानविवर्जितः ॥६२॥**
**अहं दुष्कृतकर्मा वै महापातककारकः ।**
**गृहद्वारेषु तिष्ठामि भिक्षार्थी ब्रह्मघातकः ॥६३॥**

रामेश्वरको यात्रामा जाँदा छाता र जुत्ता त्यागी निषेधित कर्म गर्ने बाहेकका चारै वर्णका मानिससँग यसो भन्दै भिक्षा माग्नू "म निश्चित रुपले पाप कमाउने, महापाप गर्ने भएको ब्रह्मघाती भिक्षाको आशमा तपाईंको ढोकामा उभिएको छु" ।

**गोकुलेषु वसेच्चैव ग्रामेषु नगरेषु च ।**
**तथा वनेषु तीर्थेषु नदीस्रवणेषु च ॥६४॥**

उसले गौशालामा, गाऊँमा, शहरमा, वनमा, तीर्थमा र नदी-झरनाका नजिकै वास बस्नू ।

**एतेषु ख्यापयेन्नेनः पुण्यं गत्वा तु सागरम् ।**
**दशयोजनविस्तीर्णं शतयोजनमायतम् ॥६५॥**
**रामचन्द्रसमादिष्टं नलसञ्चयसञ्चितम् ।**
**सेतुं दृष्ट्वा समुद्रस्य ब्रह्महत्यां व्यपोहति ॥६६॥**

यी स्थानमा आफूले गरेको पाप बताउँदै उ दश योजन चौडा र सय योजन लामो पवित्र समुद्र माथि गई रामचन्द्रको आज्ञाले नलले सामान बटुली बनाएको समुद्रको पुललाई देखेर ब्रह्महत्याको पापबाट मुक्त हुन्छ ।

**सेतुं दृष्ट्वा विशुद्धात्मा त्ववगाहेत सागरम् ।**
**यजेत वाश्वमेधेन राजा तु पृथिवीपतिः ॥६७॥**

यसरी पुलको दर्शन गरेपछि पवित्र अन्तस्करणको भई सागरमा नुहाउनू । यदि राजा भए उसले अश्वमेध गर्नू ।

**पुनः प्रत्यागतो वेश्म वासार्थमुपसर्पति ।
सपुत्रः सह भृत्यैश्च कुर्य्याद् ब्राह्मणभोजनम् ॥६८॥**

त्यसपछि फर्केर घरमा बासका लागि पुग्नु र छोरा एवं नोकरचाकरका साथ ब्राह्मणहरुलाई भोजन गराउनू ।

**गाश्चैवैकशतं दद्याच्चातुर्वेद्येषु दक्षिणाम् ।
ब्राह्मणानां प्रसादेन ब्रह्महा तु विमुच्यते ॥६९॥**

चारै वेदका ज्ञाता ब्राह्मणलाई एक सय एक गाई दक्षिणा दिनू । यसरी ब्रह्मघाती ब्राह्मणका कृपाले पापमुक्त हुन्छ ।

**सवनस्थां स्त्रियं हत्वा ब्रह्महत्याव्रतं चरेत् ।
मद्यपश्च द्विजः कुर्य्यान्नदीं गत्वा समुद्रगाम् ॥७०॥**

व्रतालु स्त्री मारे ब्रह्महत्याको व्रत गर्नू । मदिरा पिउनेले समुद्रगामिनी नदीमा व्रत गर्नू ।

**चान्द्रायणे ततश्चीर्णे कुर्य्याद् ब्राह्मणभोजनम् ।
अनडुत्सहितां गाञ्च दद्याद्विप्रेषु दक्षिणाम् ॥७१॥**

त्यसपछि चान्द्रायण व्रत गरी ब्राह्मणलाई भोजन गराउनू र साँढे सहित एउटा गाई ब्राह्मणलाई दक्षिणा दिनू ।

**अपहृत्य सुवर्णन्तु ब्राह्मणस्य ततः स्वयम् ।
गच्छेन्मुसलमादाय राजाभ्याशं वधाय तु ॥७२॥**

यदि कसैले ब्राह्मणको सुन चोर्दछ भने उसले आफूलाई शारीरिक दण्ड दिलाई पाउनका लागि मुसल लिएर राजा कहाँ जानू ।

**ततः शुद्धिमवाप्नोति राज्ञासौ मुक्त एव च ।
कामकारकृतं यत् स्यान्नान्यथा वधमर्हति ॥७३॥**

त्यसपछि राजाबाट दण्ड पाई मुक्त भई उ शुद्ध हुन्छ । यदि जानीजानी चोरी

गरिएको भए उ अन्य दण्डको भागी हुँदैन ।

**आसनाच्छयनाद्यानात् सम्भाषात् सहभोजनात् ।**
**संक्रामन्ति हि पापानि तैलबिन्दुरिवाम्भसि ॥७४॥**

एउटै, आसनमा बस्नाले, सुत्नाले, यानमा हिँड्नाले, कुराकानी गर्नाले र सँगै खानाले तेलको थोपाझैँ गरी पाप एकअर्कोलाई सर्दछ ।

**चान्द्रायणं यावकञ्च तुलापुरुष एव च ।**
**गवाञ्चैवानुगमनं सर्वपापप्रणाशनम् ॥७५॥**

चान्द्रायण व्रत, जौको आहार, पुरुषको तौल बराबर सुनदान र गाईको पछिपछि हिँडाई-यी सबै पाप विनाशक हुन् ।

**एतत् पाराशरं शास्त्रं श्लोकानां शतपञ्चकम् ।**
**द्विनवत्या समायुक्तं धर्मशास्त्रस्य संग्रहः ॥७६॥**

पाँच सय बयान्नब्बे श्लोकको पराशरले लेखेको यो शास्त्र धर्मशास्त्रको संग्रह हो ।

**यथाध्ययनकर्माणि धर्मशास्त्रमिदं तथा ।**
**अध्येतव्यं प्रयत्नेन नियतं स्वर्गकामिना ॥७७॥**

जसरी वेदा अध्ययन आदि कर्म गर्नुपर्ने हुन्छ त्यसरी नै स्वर्ग चाहने मानिसले यो धर्मशास्त्रलाई निश्चितरूपमा प्रयत्नपूर्वक पढ्नु पर्दछ ।

॥ इति श्रीपाराशरे धर्मशास्त्रे द्वादशोऽध्यायः ॥१२॥
मोहनप्रसाद सापकोटाबाट श्रीपराशरस्मृतिको बाह्रौं अध्याय
नेपालीमा भावानुवाद गरेर सकियो ।

❦✷❦

आदितः श्लोकानां समष्ट्यङ्काः-५२५+७७=६०२
शुरुदेखिका श्लोकसंख्या : ५२५+७७=६०२

❦✷❦

॥ समाप्ता चेयं पराशरसंहिता ॥
॥ पराशर संहिताको अनुवाद सकिएको छ ।
सबैको कल्याण होस् !